# सत्य आह्वान

लेखक :

मोतीउल हक [illegible] मदनी

The cooperative Office For Call & Guidance and
Edification of Expatriates in North Riyadh
Tel.: 4704466 - 4705222



ح المكتب التعاوني للدعوة والإرشاد وتوعية الجاليات بالأحساء ، ١٤٢٥هـ

*فهرسة مكتبة الملك فهد الوطنية أثناء النشر*

السعيدي ، عطاء الرحمن

تعال إلى الحق / عطاء الرحمن السعيدي - الأحساء ، ١٤٢٥هـ.

٦٠ ص ؛ ١٢ X ١٧ سم

ردمك : ٩ - ٩ - ٩٤٩٦ - ٩٩٦٠

( النص باللغة النيبالية )

١- الإسلام - مجموعات أ- العنوان

ديوي ٢١٠,٨ ١٤٢٥/٥٥٨٣

رقم الايداع: ١٤٢٥/٥٥٨٣

ردمك: ٩-٩-٩٤٩٦-٩٩٦٠

# बिषय-सूची

# भूमिका

सबै खप्रशंसा अल्लाह (ईश्वर) को लागि हो जो लोक-परलोक र प्रलयको दिनको मालिक हो । ब्रह्माण्डलाई अस्तित्वमा ल्याउनका उद्देश्य उसको उपासना हो । उपरान्त त्यसलाई बेकार छाड़ेको छैन बरु त्यस तिर संदेष्टा पठाएर उनी माथि पुस्तक अवतरण गरि भक्तहरूलाई मानविय भक्ति र संसारको संकीर्णताबाट निकालेर मात्र आफ्नै उपासना गर्नु, र लोक-परलोकको विशालताको तरफ मार्गदर्शन गर्नु भएको छ । संदेष्टाहरूमा सब भन्दा अन्तिम र उत्तम संदेष्टा माथि शान्ति होस् उहाँलाई अल्लाह (ईश्वर) ले शुभसमाचार दिने, डराउने, आफ्नो अनुमतिद्वारा आफ्नै उपासना तिर आमन्त्रण गर्ने र उज्यालो दीप बनाएर पठाउनु भएकोछ ।

यस संसारमा मानिसहरूका विभिन्न प्रयोजनहरू छन् तर हेरेर विचार गरे पछि ती आवश्यकताहरू निम्नलिखित दुई माध्यमको रूपमा अघि आउँ छन् :

१. संसारमा जीवित रहनको माध्यमहरू ।

२. सौभाग्यको माध्यमहरू ।

जीवित रहनका माध्यमहरू लग-भग खानु, पिउनु, विहे गर्नु जस्ता कुराहरूमा आधारित छन् । सौभाग्यको थुप्रै माध्यमहरू छन् तर शान्ति र संतोष यी दुईवटा महत्त्वपूर्ण

कुराहरूका आवश्यकता पर्दछ। तर एउटा प्रश्न यो उठ्दैछ कि कुन विधिले एउटा व्यक्ति यी माध्यमहरूलाई प्राप्त गर्न सक्दछ ?

- आमा-बुवाको माध्यमले ?
- राज्यको माध्यमले ?
- कि स्वयं ?

यसमा कुनै सन्देह छैन कि आमा-बुवा आफ्नो सानोतिनो बच्चाका लागि खाने र पिउने कुराहरूको व्यवस्था गर्छन्, ठूलो भए पछि उ बच्चा स्वयं खानु र पिउनका कुराहरू जम्मा गर्न सक्दछ। धनसम्पत्तिद्वारा प्रत्यक्ष-सौभाग्य प्राप्त गर्न सक्दछ। उदाहरणको रूपमा जस्तै- बिहे गर्नु, वाहन किन्नु, राम्रो लुगा लगाउनु र सुखदायी माध्यमहरू बनाउनु आदि। यसबाट उसलाई संसारमा जीवित रहनका लागि सबै माध्यमहरू र केही प्रत्यक्ष - सौभाग्यका माध्यमहरू जस्तै धन प्राप्त हुन्छ। तर एउटा प्रश्न यो उठ्दैछ कि-के धनसम्पत्तिद्वारा मानिस सौभाग्यता हासिल गर्न सक्दछ ?

यदि हामी प्राचीन र आधुनिककालका धनवान मानिसहरूको जीवनलाई हेरौं भने प्रत्यक्षरूपमा उनीहरूका जीवन सबैलाई मन पराउँछ र सम्पूर्ण मानिस स्वयंका लागि पनि त्यस्तै जीवनको अभिलाषा गर्दछन्। तर वास्तविक कुरो के हो भने उनीहरूको जीवन पनि दुःख र विपदबाट खाली छैन। ती मध्ये केही मानिसहरूलाई उनको आपत र पीडाले

आत्महत्या गर्नसम्म पुऱ्याई दिईसकेको छ, कसैलाई यस्तो रोगले समातेको छ जसमा धन-माल कुनै प्रकारको सहायता गर्न सक्दैन, केहीलाई आफ्नो धन-सम्पत्ति माथि अर्को मानिसहरूद्वारा आक्रमणको डरले गर्दा रात भरी निद्रा आउँदैन र केही मानिसहरू आन्तरिक विपद सहन गरेर जीवन व्यतीत गर्छन् तर त्यो दुःखको कारण थाहा हुँदैन। मानसिक डाक्टरहरू कहाँ दिन, राती त्यस दुःखबाट छुट्कारा पाउनका लागि आउने जाने गर्छन् तर त्यसको कुनै बाटो निस्कदैन।

जब उनीहरूलाई माल सौभाग्य प्रदान गर्न सक्दैन भने त्यो मूल सौभाग्यको माध्यम होइन।

उपर्युक्त कुरा उल्लेख गरिएको छ - कि मूल सौभाग्यका माध्यमहरू शान्ति र संतोष हुन्। शान्ति राज्यको माध्यमले प्राप्त हुन्छ। अनि मात्र संतोष बाकी रहन्छ .. त्यो सब भन्दा ठूलो अप्रत्यक्ष कुरा हो। तसर्थ त्यो कुन चीज हो जसलाई यस संसारमा एउटा व्यक्तिले समातेर संतोष महसुस गरि सौभाग्य प्राप्त गर्न सक्दछ ?

निस्सन्देह जब एउटा मानिसको आचरण उसको आस्थाको अनुकूल होस् भने उसले संतोष महसुस गर्न सक्दछ के यस्तो कुरो होइन ?

उदाहरणार्थ : यदि यहाँले एउटा धेरै उमेर भएको बूढो मानिसलाई सडक छिर्दै भेटेर मद्दत गर्नु भयो भने

यहाँलाई आन्तिरक सौभाग्य र संतुष्टि प्राप्त हुन्छ किनभने यहाँको आचरण विश्वासको अनुकूल भयो । सबैको विश्वास हुन्छ कि बूढा मानिसहरूलाई अर्को व्यक्तिद्वारा गरिएका मद्दतको प्रयोजन रहन्छ ।

यदि यहाँ कुनै पनि कार्यमा सफलताको विश्वास गरि त्यसलाई प्राप्त गर्नका लागि माध्यमहरू पनि प्रयोग गर्नुहुन्छ भने त्यसमा सफल भए पछि यहाँले सौभाग्य महसुस गर्नु हुन्छ । किनभने यहाँको चरित्र यहाँद्वारा सफलताको महत्त्वमा राखिएको आस्थाको अनुकूल भयो । यदि सफलता प्राप्त भएन भने यहाँले दुःख महसुस गर्नु हुनेछ किनभने सफलताको महत्वमा राखिएको आस्था बमोजिम माध्यमहरू प्रयोग गर्नु भएन, अहिले यहाँको आचरण विश्वासको विरुद्ध भयो । तर यो कुरा बिर्सनु हुँदैन कि केही अस्थायी सौभाग्य पनि छन् जस्तै एउटा व्यक्तिले चोरी गऱ्यो र त्यो चोरीको सम्पत्तिबाट आफ्नो इच्छा बमोजिम सामानहरू किन्यो । उसलाई केही समयका लागि खुसी र सौभाग्य प्राप्त हुन्छ, तर उसले कहिल्यै आफ्नो भित्र भएको आन्तरिक आवाजलाई बिर्सन् सक्दैन कि चोरी नराम्रो कुरो हो । यस्तो अवस्थामा उसले सौभाग्य प्राप्त गर्न सक्दैन किन भने उसको आचरण उसद्वारा गरिएको विश्वासको विरुद्ध भयो कि चोरी नराम्रो कुरा हो र यस्तै जुन व्यक्ति व्यभिचार र हत्या गर्छ ... ।

निस्सन्देह संतोष जुन सौभाग्यको मूल आधार हो, त्यो एउटा आन्तरिक अनुभव हो । जसलाई कोही किन्न

सक्दैन र त्यस माथि दाबी पनि गर्न सक्दैन । कहिलेकाहीं एउटा गरीब व्यक्तिलाई खुश र संतुष्ट हेरिन्छ र त्यहीं यस्तो मानिसहरू पनि छन् जुन संतुष्टि-खुशीको दाबी गर्छन् । तर उनीहरूलाई हेरेर यो थाहा हुन्छ कि वास्तवमा यिनीहरू संतुष्ट छैनन् ।

माथि उल्लेख गरिएको छ - कि जब एउटा व्यक्तिको आचरण उसको आस्थाको अनुरूप हुन्छ भने उसलाई सौभाग्य, संतोष र शान्ति प्राप्त हुन्छ । तर कुन विधिले उसको चरित्र, विश्वासको अनुकूल हुनसक्छ ?

निस्सन्देह जीवनमा प्रत्येक मानिसको विश्वास उसको अभिप्राय माथि निर्भर छ । जब उसलाई यस जीवनमा आफ्नो महत्त्व थाहा हुनुका साथै यो ज्ञान हुन्छ कि उसको कुनै दर्जा हो भने उसको अघि विभिन्न बाटा उत्पन्न हुन्छन् जुन माथि ऊ विश्वास र आस्था राख्दछ । उदाहरणार्थ, यदि एउटा व्यक्ति डाक्टर बन्नको अभिप्राय गर्छ भने उसको अघि विभिन्न बाटा आई हाल्छन् । जस माथि विश्वास गरेर आफ्नो कार्यमा सफल हुनका लागि सम्पूर्ण माध्यमहरू प्रयोग गर्छ । यस्तै जब उसलाई यस संसारमा आफ्नो महत्त्व र दर्जा थाहा हुन्छ भने उसको अगाडि विभिन्न बाटाहरू आई हाल्नेछन् । जुन माथि आस्था गरेर त्यसमा सफल हुनका लागि पूर्ण माध्यमहरू प्रयोग गर्नेछ ।

तर, मानिसलाई यो कसरी थाहा होओस् कि यस संसारमा उसको के महत्त्व र कुन दर्जा हो ? साथै के उही नै

आफ्नो यस महत्त्वलाई नियुक्ति गर्ने वाला हो ? यदि उसलाई यस विषयमा ज्ञान भयो भने त्यसमा सफल हुन र आफ्नो विश्वास, चरित्रको अनुरूप गर्नका लागि के गर्नेछ जसबाट उसलाई त्यो सौभाग्य जसको सम्पूर्ण मानिसहरू आशा राख्द छन्, प्राप्त भइ हालोस् । यस प्रश्नको उत्तर र यस बाहेक अनेकौं अमूल्य कुराहरू आउने पाठ्यमा विवरण गरिएको छ ।

## हाम्रो जन्मको उद्देश्य

संसारमा भएका सृजनाहरूलाई हेरेर ज्ञान प्राप्त हुन्छ कि यस संसारमा विभिन्न प्रकारका रचनाहरू छन् । यदि कुनै पनि व्यक्ति सम्पूर्ण सृजनाहरूको गणना गर्न चाहेको छ भने कहिल्यै गर्न सक्दैन र यो उसको क्षमताबाट बाहिरै छ । यी रचनाहरूमा कतिपय यस्तो वस्तुहरू छन् जसलाई हामी प्रतिदिन आफ्नो दृष्टिद्वारा हेर्छौं एंव लाभ पनि प्राप्त गर्छौं । उदाहरणार्थ सूर्य, चन्द्रमा, पृथ्वी, आकाश, समुद्र र त्यसमा भएका सम्पूर्ण कुराहरू, खाने र पिउने पदार्थ तथा विभिन्न प्रकारका जनावरहरू इत्यादि । यस बाहेक अनेकौं आश्चर्यजनक रचनाहरू पाइन्छन् । जसलाई हेरेर मानवीय बुद्धि चकित भईहाल्छ ।

संसारका सृष्टिहरू मध्ये सब भन्दा महान सृष्टि मनुष्य हो । किनभने रचकले यसलाई अमूल्य बस्तु प्रदान गरेको छ जुन यस बाहेक कसैलाई पनि दिइएको छैन । र

त्यो मष्तिस्क हो। जसबाट उसलाई महानता र उच्चतर प्राप्त छ, त्यसैबाट ऊ राम्रा र नराम्रा कुराहरूमा विवेक गर्छ। मानिस अहिले आफ्नो त्यो अमूल्य चीज प्रयोग गरेर कहाँसम्म पुगी सकेको छ यसको ज्ञान यहाँलाई स्वयं होला, हामी ले बयान गर्नु पर्दैन।

सबैलाई थाहा छ कि संसारमा उपस्थित सम्पूर्ण वस्तुहरू मानिसको सेवाका लागि बनाइएका छन्। तर यो प्रश्न उठ्दैछ कि संसारको अन्य रचना संग हाम्रो रचना किन गरिएको छ ? रचकको कुनै उद्देश्य छ कि छैन ? यो एउटा ठूलो प्रश्न हो। जसमा हामीले विचार गर्नु पर्दछ।

अचेल हामी हेर्दै छौं कि मानिसद्वारा निर्माण गरिएका कुराहरूको कुनै न कुनै उद्देश्य छ विना अभिप्राय त्यसलाई अस्तित्वमा ल्याइएको छैन। उदाहरणको रूपमा एउटा सानो चीज कलम जसलाई लेखनको उद्देश्य राखेर बनाइएको छ, विमान वाहनको रूपमा प्रयोग गर्नका लागि अस्तित्वमा ल्याइएको छ, र यस्तै एउटा मानिस शक्ति प्राप्त गर्नको उद्देश्यलाई राखेर भोजन गर्छ, नाफाको अभिप्राय राखेर व्यापार गर्छ, स्वास्थ्य एंव पवित्रताको उद्देश्य राखेर स्नान गर्छ। तथा यस बाहेक अनेकौं उदाहरणहरू छन्। यसको अतिरिक्त जुन सुकै काम गर्छ त्यसको केही न केही उद्देश्य होला। के कुनै पनि व्यक्ति यो भन्न सक्दछ ? कि उसको कुनै पनि कर्म वा गति बिना उद्देश्य कै हो ? कदापि होइन।

जब हामी कुनै पनि कार्य, विना उद्देश्य गर्दैनौं भने यो स्पष्ट छ कि जसले हाम्रो सृजना गरेको छ उसको पनि केही न केही उद्देश्य होला । सृष्टाका कुनैपनि सृजना तत्वदर्शित र उद्देश्य विनाका छैनन् । अझ सृष्टाको सर्वोत्कृष्ट रचना मानवजाती त झन् विना उद्देश्य सृजना हुने प्रश्न नै उठ्दैन । यस ब्रह्माण्डमा अवस्थित हरेक कणहरूको सृजनामा उद्देश्य नै उद्देश्यले भरिएको छ । सम्पूर्ण ब्रह्माण्ड समेत त्यसै खेलौनाका लागि सृष्टाले सृजना गरेका होइनन् ।

अब यो प्रश्न उठ्दैछ कि हाम्रो अस्तित्वको कारण के हो ? के हाम्रो जन्मको उद्देश्य व्यापार गर्न, खानु र पिउनु हो ? के हाम्रो जन्मको अभिप्राय एक अर्का मानिस माथि अन्याय र अत्याचार हो ? के हाम्रो जन्मको प्रयोजन संसारमा उपस्थित व्यक्तिहरूको सेवा हो ? वा स्रष्टाले हामीलाई विना कुनै उद्देश्य जन्मित गरेको हो ?

यदि कसैको विचार यो हो कि उसलाई विना कुनै उद्देश्य रचिएको छ भने महसूस गर्नका लागि आफ्नो शरीरका अंगहरू मध्ये कुनै पनि अंग जस्तै खुट्टालाई भाँचेर हेरोस् कि के खुट्टा विना कुनै उद्देश्य रचिएको थियो ? कानको प्वाल बन्द गरेर विचार गरोस् कि के कानलाई विना कुनै कारण बनाइएको थियो ?

यहाँ के भन्नु हुन्छ ? यदि कुनै पनि व्यक्तिले यस्तो गऱ्यो भने संसारका सबै मानिसहरू यो भन्ने छन् कि हे मुर्ख !

तिमीले यस्तो गरेर ती सबैको उद्देश्यलाई समाप्त गरिदिएकाछौ । यदि कुनै पनि व्यक्ति ध्यानले शरीरमा भएका सम्पूर्ण अंगहरूको विषयमा उद्देश्य बारे ज्ञान प्राप्त गर्नका लागि विचार गरोस् भने उसले अवश्य नै यो भन्नु पर्दछ कि कुनै चिकित्सक महाविद्यालयमा विना शिक्षा प्राप्त गरी यो कुरो असम्भव हो । यदि यहाँ कुनै डाक्टरलाई मानिसका अंगहरूको विषयमा सोध्नु हुन्छ भने यो अंग यस उद्देश्यका लागि बनाइएको हो भनेर उत्तर दिने छ । अतः मुख सम्पूर्ण शरीरका लागि खाना खाउँछ र मुटु सम्पूर्ण शरीरमा रगत पुऱ्याउँछ । यस ज्ञान पछि के कुनै ज्ञानी व्यक्ति यो भन्न सक्दछ कि मानवजातीलाई बेकारमा रचिएको हो ?

यहाँ त्यो व्यक्तिको विषयमा के भन्नु हुन्छ जसलाई आफ्नो घरको उद्देश्य थाहा छैन वा लगाउने लुगाको अभिप्रायको विषयमा ज्ञान छैन ? निस्सन्देह यही भन्नु हुन्छ कि यस्तो व्यक्ति संसारको सब भन्दा मूर्ख र अज्ञान व्यक्ति हो । यहाँलाई यो ज्ञान हुनु पर्दछ कि यस्तो मुर्ख र अज्ञान व्यक्तिहरू पनि छन् । जसलाई आफ्नो आँखा, हात र खुट्टा आदिको उद्देश्य थाहा छैन । यस भन्दा ठूलो अज्ञानता र अनयोलताबाट भरिएको त्यो मानिस हो । जसलाई आफ्नो शरीर र आफ्नो अस्तित्वको उद्देश्य एंव नितिको विषयमा ज्ञान छैन । संगै यो पनि स्पष्ट रहोस् कि कुनै पनि चीजको विषयमा ज्ञान, विना रचक वा उसको संदेष्टाद्वारा खबर गरी हुँदैन । यदि यहाँले कुनै पनि वस्तु रचनु भएको हो भने

हामीलाई त्यती बेलासम्म त्यसको निति एवम उद्देश्य थाहा हुन सक्दैन । जबसम्म यहाँद्वारा हामीलाई खबर नगरिदैन । यसै प्रकार हाम्रो अस्तित्वको उद्देश्य हामीलाई विना रचक वा उसको कोही संदेष्टाद्वारा सूचना गरी थाहा हुन सक्दैन । जब हामी यस कुराबाट सहमत छौं भने आउनुहोस् हेरौं कि जुन विश्वकर्ताले हामीलाई माटोबाट अस्तित्वमा ल्याएको छ । फेरि वीर्यद्वारा विभिन्न रूपमा जन्म दिएको छ । के उसले हामीलाई हाम्रो अस्तित्वको कुनै उद्देश्य बताएको छ ? अँ । सृष्टि र प्रकृतिका हरेक वस्तुहरू स्रष्टाको गुणगान गर्नका लागि सृजित भएका हुन् । मानव र जिन्न (दानव) सृजना गर्नुका उद्देश्यका सम्बन्धमा स्रष्टाको यो कथन छ : "मैले (अल्लाहले) मनुष्य र जिन्न (दानव) लाई यसका अतिरिक्त कुनै कामको लागि बनाएको होइन कि उनीहरू मेरो उपासना गरुन्" । यसर्थ स्रष्टाको स्तुति गर्दै आफ्नो जीवन व्यतीत गर्नु मानव र दानवजातीको रचनाको उद्देश्य हो भने सो कार्यलाई सफल एवम पूरा गर्नु उसको परम कर्तव्य हो ।

## स्रष्टा एक्लै छ

हाम्रो जन्मको उद्देश्य मात्र उसै स्रष्टाको गुणगान र उपासना हो जसले सृष्टिलाई रचेको छ भन्ने कुरा स्पष्ट भइसक्यो । यहाँ यसको पनि ज्ञान राख्नु अनिवार्य छ कि यस विशाल ब्रह्मण्ड र यसमा भएका समस्त वस्तुलाई अस्तित्वमा ल्याउने वाला मात्र एउटै हो । उसको आज्ञाद्वारा संसारको

नियम अत्यन्त नियमित रूपले चल्दैछ । प्रत्येक वस्तु एक आपसमा नियमित जुटेका छन् । त्यसमा कुनै अनियमित वस्तु हेर्न गाह्रो छ । अर्थात सूर्य, चन्द्रमा, राती, दिन आकाश र पृथ्वी सबै आ-आफ्ना काम नियमित रूपमा गरिराख्दछन् । कहिल्यै यस्तो भएको छैन कि दिनमा सूर्यको सट्टामा चन्द्रमा वा रातीमा चन्द्रमाको सट्टामा सूर्य निस्केको छ । सृष्टिको महानता र विशालताले स्रष्टाको महत्त्व प्रमाणित हुन्छ, रचनाद्वारा रचकको महानताको विषयमा ज्ञान प्राप्त हुन्छ, जब सृजना अति महान छ जसको विषयमा मानवीय मस्तिष्क सम्पूर्ण रूपले अनुमान गर्न सक्दैन भने सृजकको विषयमा अवश्य पूर्ण रूपले ज्ञान राख्नु असम्भवता हो । कसैले स्रष्टालाई दुई भएको र कसैले तीन भएको भनेका छन् भने यसै गरी कसैले स्रष्टा अनगिन्ति छन् भनेका छन् । कसै-कसैले स्रष्टाको प्रभुत्वलाई अलग-अलग भागमा विभाजन गरेर प्रस्तुत गरेका छन् । यस्तै एउटा पानीको देवता, एउटा हावाको देवता, एउटा आगोको देवता इत्यादि छन् । यसरी यी कुराहरूबाट यो प्रश्न उठ्दैछ कि अति महासृष्टि, आकाश र पृथ्वी आदिलाई उत्पन्न गर्ने र सबैलाई नियमित रूपमा चलाउने वाला एउटै हो वा कयौंनको मद्दतद्वारा चल्दै छ ? निस्सन्देह यसको उत्तर ऊ एक्लै हो, न त उसको कोही सन्तान छ, न नै ऊ कसैको सन्तान हो र ऊ जस्तो कोही पनि छैन भनेर आउने छ । संगै यो पनि स्पष्ट रहोस् कि स्रष्टा संग अन्य कसैलाई साझेदार मात्र उसको सहायक सम्झनलाई मस्तिष्क पनि स्वीकार गर्दैन । र यो असम्भव हो

किनभने यदि यस्तो हुन्थ्यो भने संसारमा यति नियमित व्यवस्था हुँदैन्थ्यो । हरेकले आफ्नो सृष्टिमा आफ्नो इच्छा बमोजिम हुकुम लागु गर्दथे । यदि वास्तवमा आकाश र धरतीमा दुई स्रष्टा हुन्थे भने यस ब्रह्मण्डमा दुईवटा शक्तिहरू, दुईवटा विचार, बुद्धि र इच्छा कार्य गर्थ्यो र जब दुईको इच्छा र निर्णय यस विश्वमा लागु हुन्थ्यो भने यो विश्वको नियमित व्यवस्था, जुन शुरू देखि नै बिना कुनै बाधा चल्दै आई राखेको छ । त्यो समाप्त भइहाल्थ्यो । किनभने दुबैको इच्छामा परस्पर भिडन्त हुन्थ्यो र दुबैको चाहना एक-अर्काको विपरीत दिशामा प्रयोग भएर उसको परिणाम उल्टो र विनाशको रूपमा उत्पन्न हुन्थ्यो । अहिले सम्म यस्तो भएको छैन भनेर यसको अर्थ स्पष्ट छ कि यस विशाल ब्रह्माण्डमा अवश्य नै त्यो मात्र एउटै ठूलो शक्ति हो जसको इच्छा र आदेश सबै माथि लागु हुन्छ । जे पनि हुन्छ सब उसैको आदेश र आज्ञा बमोजिम हुन्छ । उसद्वारा प्रदान गरिएका कुराहरूलाई कोही रोक्न सक्दैन र उसले जसको मद्दत गर्दैन त्यसको कसैले पनि सहायता गरेर सफल पार्न सक्दैन ।

जब यो स्पष्ट भइ सक्यो कि स्रष्टा मात्र एउटै हो, जुन सबै वस्तुलाई एउटा उचित व्यवस्थामा सन्चालन गरीरहेको छ । तब यहाँ यो प्रश्न उठ्छ कि उस स्रष्टालाई के भनिन्छ ? विद्वान-ज्ञानी मान्छेहरूले उस स्रष्टालाई चिने र उसलाई अल्लाहको नाम ले पुकारे ।

# अल्लाहको अस्तित्वमा आस्था

वास्तवमा स्रष्टा एक्लै अल्लाह हो भन्ने कुरा हामीले उपर्युक्त अध्यायबाट थाहा पाइसक्यौं । अब यहाँ उसको अस्तित्वको ज्ञान र उसमा पूर्ण रूपले विश्वास नहुन्जेलसम्म सर्वश्रेष्ठ अल्लाहद्वारा सृष्टिको सृजनाका उद्देश्यको विषयमा ज्ञान र उसको उपासना हुन सक्दैन भन्ने कुराको चर्चा गरिन्छ :

सर्वप्रथम त मानिसलाई अल्लाहको अस्तित्वमा पूर्ण आस्था हुनु पर्छ किनभने अल्लाह छ भन्ने कुरामा उसलाई विश्वास नहुँदासम्म उसले अल्लाहको अज्ञापालन कसरी गर्न सक्छ ? यस्तै उसलाई अल्लाहको विशेषताको ज्ञान पनि आवश्यक छ किनभने अल्लाह एक हो र आफ्नो प्रभुत्वमा उसको कोही साझेदार छैन भन्ने कुरा थाहा नहुँदा ऊ अरु सामु शिर निहुराउन र हात फैलाउनबाट कसरी जोगिन सक्दछ ? अल्लाह प्रत्येक चीज हेर्ने र सुन्नेवाला छ तथा प्रत्येक चीजको खबर राख्दछ भन्ने कुरा थाहा नहुने व्यक्ति आफूले आफैलाई अल्लाहको अवज्ञाबाट कसरी रोक्न सक्छ ? यस्ता कैयौं प्रश्नहरू माथि विचार गर्दा विचार र व्यवहारका लागि मानिसमा हुनुपर्ने विशेषताहरूको विकासका निम्ति अल्लाहको अस्तित्व र विशेषताहरूको वास्तविक ज्ञान अति आवश्यक छ ।

हामीलाई थाहा छ कि कुनै पनि परिवार कुनै अभिभावक र अगुवा विना राम्ररी जीवन व्यतीत गर्न सक्दैन । कुनै पनि

नगर कुनै उचित नगरपालिका विना प्रगति गर्न सक्दैन । कुनै पनि मुलुकको अस्तित्व कुनै राजनैतिक नेता विना टिक्न सक्दैन । यसै गरी यो पनि सार्वभौमिक सत्यता र वास्तविक्ता हो कि कुनै पनि वस्तु आफै निर्माण भएन । प्रत्येक दिन हामी अवलोकन गर्छौं र हेर्छौं कि ब्रह्माण्ड एउटा अत्योचित ढंगले आफ्नो मार्गमा चलिरहेको छ । अनि के यो प्रश्न उठ्दैन कि यो यस्तै नै अस्तित्वमा आयो ? के हामी मान्छेको जन्म र संसारको अस्तित्वलाई कुनै घटना सित जोड्न सक्छौं ? विश्वमा जहाँ पनि अल्लाहिक कलाका चिन्ह तथा संकेतहरू फैलिएका छन् । जुन यस्तो कारखाना एउटै कालीगढले बनाएको तथा उसैद्वारा संचालित छ भन्ने कुराको प्रत्यक्ष प्रमाण छन् । यस्ता चिन्हहरूमा सर्वश्रेष्ठ अल्लाहका समस्त गुणहरूको प्रतिबिम्ब देखिन्छन् । उसका तत्वदर्शिता, उसको ज्ञान, उसको सामर्थ्य, उसको दयालुपन, उसको पालनकिया, उसको प्रकोप, यहाँसम्म कि उसको सम्पूर्ण गुणहरूको गरिमा उसका कामहरूमा व्यक्त भएको छैन र ? तर, मानिसको बुद्धि र उसको योग्यताले यस्ता कुराहरूलाई हेर्ने र बुझ्ने काममा प्रायः गल्ती गरेको छ । यी जम्मै चिन्हहरू आँखा सामु भए तापनि कसैले अल्लाहको अस्तित्वलाई नकारेका छन् । के यीनै प्रमाणहरूद्वारा अल्लाहको अस्तित्व साबित हुँदैन र ? हुन्छ, र यो सूर्य भन्दा बढ़ी स्पष्ट छ किनभने एउटा पसल, पसले विना चल्दैन, एउटा कारखानाको अस्तित्व कारीगर विना बाकी रहन सक्दैन । जब यस्ता स-साना वस्तुहरू टिक्न सक्दैनन् भने अति ठूलो

ब्रह्माण्ड आफै निर्माण भएको छैन भन्ने कुरामा हामीले अवश्य विश्वास गरी अल्लाहको अस्तित्वलाई स्वीकार गर्नु पर्दछ ।

हिन्दू धर्मको ग्रन्थ ऋगवेद मंडल-१ सूक्त-११ रिचा-३ मा यस प्रकार भनिएको छ : "यदि ईश्वर (अल्लाह) नहुन्थ्यो भने यो जगत कसरी उत्पन्न हुन्थ्यो ? तथा ईश्वर सम्पूर्ण पदार्थहरूलाई उत्पन्न गरेर सबै मनुष्यलाई नदिन्थ्यो भने मनुष्यहरू कसरी जीवित रहन् सक्थे ? यी सम्पूर्ण कार्यहरूलाई उत्पन्न गर्ने र समस्त सुखहरू प्रदान गर्ने मात्र एउटै ईश्वर नै हो " ।

अल्लाह कुन शक्ति हो ? उसलाई के भनिन्छ ? र ऊ कहाँ छ ? अल्लाह आकाशमा छ, उसलाई कसैले हेरेको छैन तर ऊ सबैलाई हेर्छ, अतः उसको हुकुम बमोजिम नै संसारको हरेक वस्तुमा गति छ, ऊ कसैको शरीरमा प्रवेश गरेको छैन, किनभने यदि कसैको शरीरमा प्रवेश गरेको हुन्थ्यो भने उसलाई त्यस शरीरको आवश्यकता हुन्थ्यो । जबकि ऊ कसैमा आश्रित छैन। उसले स्वयं आफना भक्तहरूलाई बताएकोछ कि ऊ एक्लै, सर्वाधार हो, उसको आमा-बुवा छैनन्, न त उसको कोही सन्तान छ, न ऊ कसैको सन्तान हो र ऊ जस्तो कोही पनि छैन । ऊ सुन्ने र देख्ने वाला हो । उसलाई निद्रा तथा ऊँघ आउँदैन । यस प्रकार स्रष्टा अनादि, अमर र चिरञ्जीवी छ ।

हिन्दू धर्मका वेदहरूमा पनि अल्लाहको विषयमा थुप्रै कुराहरू छन्। ऋगवेद मंडल - ९ सूक्त - १० रीचा - ८ मा यस

प्रकार छ : "जब कोही सोधोस् कि ईश्वर कति महान छ ? भने उत्तर यो हो कि जसलाई सम्पूर्ण आकाश आदि र ठूला-ठूला पदार्थ पनि घेरमा लिन सक्दैन, किनभने ऊ अनन्त हो । त जब परमेश्वरका गुण र कर्महरूका गणना कोही गर्न सक्दैन भने उसको अन्त खोज्नमा कसरी समर्थ हुन सक्दछ" ।

केनौं उपान्यशतमा १-६ मा यस प्रकार छ :

यच्चेश्याशाना पशुवदि एना । चशश्शेम शी पश्वदी ।
तदेवा ब्रहमत्तोम विद्‌दी नेदम । यदिदः वमोपास्दे ।

अर्थ : "ईश्वर त्यो हो जसलाई आँखाहरू हेर्न सक्दैनन् र ऊ तिनीलाई हेर्नको शक्ति प्रदान गर्छ । एउटा मानिस, जसलाई आफ्नो आँखाद्वारा हेर्छ र त्यसको उपासना गर्छ त्यो ईश्वर कहिल्यै हुन सक्दैन" ।

अहिले यहाँ स्वयं विचार गर्नु र सोच्नु होस् कि के ऊ बोट-बिरुवा हो ? के ऊ मूर्ति वा कुनै वस्तुको चित्र हो ? निस्सन्देह अनिवार्य रूपले यो भन्नु हुन्छ कि ऊ बोट बिरुवा होइन न मुर्ति वा कुनै वस्तुको चित्र नै हो किनभने यी सबैलाई हामी हेर्छौं र ती आफ्ना जस्तै वा कुनै पनि वस्तुको सृजना पनि गर्न सक्तैनन् ।

# मनुष्यको महत्व

अल्लाह महान, शक्तिशाली हो । सबै जीवजन्तुहरू उसैको अधीनमा छन् । ऊ कसैमा आश्रित छैन र ऊ एक्लै हो उसको कोही साझेदार छैन भन्ने कुराको पनि ज्ञान प्राप्त भइसक्यो। मनुष्यलाई बनाएर संसारमा भएका समस्त वस्तुहरू उसैको लागि तयार गरिएको छ । जसबाट मानिसको महत्त्व र प्रतिनिधित्व प्रकट हुन्छ भन्ने कुराको वर्णन गर्दै छु ।

अल्लाहले सर्वप्रथम एउटा मानिस आदम मानव परम पिताको सृष्टि माटोबाट गऱ्यो अनि उही मानिसबाट उसको जोडी पनि उसैले तयार गऱ्यो । ती आदि पुरुष र स्त्रीका सन्तानहरू अहिले सम्पूर्ण संसारमा फैलिएका छन् । संसारमा जति पनि मानिसहरू जन्मिएका छन् । ती सबै उनै एक दम्पतीका सन्तान हुन् । मानव जातिको प्रारम्भ एउटै मानिसबाट भएको तथ्य सबै जातिका धार्मिक एवं ऐतिहासिक ग्रन्थहरूले मानेका छन् । यस प्रकार सम्पूर्ण मानिसको उत्पत्ति धरतीद्वारा भयो र उनैद्वारा संसारको बसोवास गरी आदमको सन्तानलाई सम्मान दियो, तिनीहरूलाई थल एवं जलमा प्रयोग गरिने वाहन प्रदान गऱ्यो, तथा तिनीलाई पवित्र वस्तुहरूद्वारा जीविका दिएर आफ्नो बहुतौं सृष्टि माथि श्रेष्ठता प्रदान गऱ्यो । यो मान तथा सम्मान मनुष्यको रूपमा विश्वासी र अविश्वासी सबैलाई प्राप्त छ । यो सम्मान विभिन्न रूपमा छ। जस प्रकार रंग-रूप, शरीर, स्वरूप एवं आकार-प्रकार

अल्लाहले मनुष्यलाई प्रदान गरेको छ। त्यो कुनै अन्य सृष्टिलाई प्राप्त छैन। यी प्रदत्तहरू मध्ये सब भन्दा श्रेष्ठ कुरो बुद्धि हो। जुन बुद्धि मनुष्यलाई प्राप्त छ। जनावर आदि त्यसबाट वंचित छन्। यसै मस्तिष्क र बुद्धिद्वारा ऊ उचित, अनुचित, लाभकारी, हानिकारक, सुन्दर तथा कुरूप वस्तुहरूमा निर्णय गर्नको सामर्थ्य राख्दछ। यसै बुद्धि र समझद्वारा ऊ अल्लाहको अन्य सृष्टिबाट लाभ प्राप्त गर्छ र तिनीहरूलाई आफ्नो अधीनमा राख्छ। यसै बुद्धि र समझद्वारा ऊ यस्तो भवनहरूको निर्माण, यस्तो वस्त्रहरूको खोज, तथा यस्तो वस्तुहरूका उत्पादन गर्छ जुन उसलाई गर्मीको वायुको ताप, जाडोको शीत तथा ऋतुहरूको अन्य कठिनायीहरूबाट सुरक्षित राख्दछन्। यसै बुद्धि र समझद्वारा आफ्नो स्रेष्टाको विषयमा ज्ञान, संसारमा आफ्नो अस्तित्वको उद्देश्य स्रेष्टाको उपासना हो भन्ने कुराको बारेमा जानकारी राख्दछ। यसका अतिरिक्त सृष्टिमा भएका सम्पूर्ण वस्तुहरूलाई अल्लाहले मनुष्यको सेवा माथि खटाई राखेको छ। चन्द्रमा, सूर्य, वायु, जल र अन्य अनगिन्त वस्तुहरू छन्। जसबाट मनुष्य लाभान्वित हुँदैछ।

मानिसका खाने पदार्थहरू मध्ये जो अन्न, मेवा, र फल उसले उब्जाएको छ त्यसमा जो-जो स्वाद र शक्ति राखिएको छ। विभिन्न प्रकार तथा जातिको यो भोजन, यो स्वाद, स्वादिष्ट फल, शक्तिप्रद, हर्षवर्धक मिश्रित र अन्य सुखसामग्रीहरू मनुष्यहरू बाहेक कसै अन्य सृष्टिलाई प्राप्त छ र ? यसमा कुनै सन्देह छैन कि पूर्वोक्त विवरणबाट

मनुष्यको बहुतौं सृष्टि माथि श्रेष्ठता एवं उच्चता स्पष्ट हुन्छ । यो पनि याद रहोस् कि यी कसैको निजी सम्पत्ति वा कसैको बाबुबाजेको सम्पत्ति होइन जसलाई जुन किसिमले चाहुन्, खाउन्, पिउन्, उडाउन् । यस संसारमा जनावर, पशुपंक्षी, वृक्ष, नदी, पर्वत, सुन-चाँदी, खाद्यान्न र संसारका सम्पूर्ण चीजहरू मनुष्यको सुपुर्द गरिएका छन् । तर यो पनि सम्झनु पर्दछ कि सम्पूर्ण सुखसामग्री प्रदान गर्ने हस्तीको पूर्ण रूपले अनुसरण गर्नु अनिवार्य हुन्छ ।

## ईशदूत्वको आवश्यकता

हामीलाई जन्म दिने अल्लाह हो र हाम्रो जन्मको उद्देश्य विश्वकर्ता अल्लाहको उपासना हो भन्ने कुरा थाहा भइसक्यो । तर हाम्रो जन्मको उद्देश्य उसको उपासना हो भन्ने कुराको विषयमा कसरी ज्ञान प्राप्त गरौं ? हामी अल्लाहको उपासना कसरी गरौं? यस्ता थुप्रै प्रश्नहरू उठ्दैछन् ।

हेर्नुहोस्, जब हामीलाई कुनै कुराको ज्ञान भएन भने हामी जान्ने मानिसको खोजी गरेर उसले भने बमोजिम गर्छौं । हामी बिरामी भएको आफ्नो उपचार स्वयं गर्दैनौं बरु प्रमाणपत्र प्राप्त र अनुभवी डाक्टरको समीपमा जान्छौं । यसैगरी कानूनका बारेमा हामी वकील प्रति विश्वास गर्छौं र उसको आज्ञापालन गर्छौं । शिक्षाका बारेमा अध्यापक प्रति विश्वास गर्छौं र उसले भनेका कुराहरू हामी खुरु खुरु

मान्छौं । हामीले कतै बाटो बिरायौं भने जान्ने मान्छेसँग सोध्छौं र ऊ प्रति विश्वास गर्छौं र उसले बताई दिएको बाटोबाट यात्रा गर्छौं । तात्पर्य के भने संसारको प्रत्येक विषयमा जानकारी र ज्ञान प्राप्त गर्नका निम्ति कुनै जान्ने मान्छे माथि विश्वास गर्नु पर्छ र उसको आदेश मान्नु पर्छ ।

संसारिक जीवन को विषयमा ज्ञान प्रति मानिस नभए भने हामी ठीक र उचित बाटोमा हिंड्न सक्दैनौं भने के आफ्नो जन्मको उद्देश्यको बारेमा बिना कुनै जान्ने मान्छे ज्ञान प्राप्त गर्न सक्छौं ? हामीलाई ईश्वरीय ईच्छानुसार जीवन व्यतीत गर्ने तरीका थाहा छैन, हामीलाई आफ्नो सार्वकालिक जीवनको विषयमा ज्ञान छैन र हामी अल्लाहको उपासना कसरी गरौं ? भन्ने कुरा पनि थाहा छैन । ईश्वरीय ईच्छानुसार जीवन व्यतीत गर्ने ठीक तरीका के हो ? भन्ने मानिसले जान्नु पर्छ, अल्लाहलाई मन पर्ने कुरा मानिसले अपनाउनु पर्छ । र अल्लाहलाई मन नपर्ने कुराबाट जोगिनु पर्छ । यस कामका निम्ति मानिसले अल्लाहका कानून र विधि-विधानबाट राम्ररी परिचित हुनु पर्छ । अल्लाहका कानून र विधि-विधान यिनै हुन् तथा यिनैको अनुसरण गर्नाले अल्लाहको प्रसन्नता प्राप्त गर्न सकिन्छ भन्ने कुरा प्रति उसलाई पूर्ण विश्वास हुनु आवश्यक छ किनभने यी कुराहरूको ज्ञान उसलाई भएन भने उसले कुन कुराको आज्ञा पालन गर्ने ?

फेरि मनुष्यलाई ईश्वरीय इच्छाको विपरित हिंडनाले उसले मनपराएको नियम एवं विधानको पालना नगर्नाले के

परिणाम भोग्नु पर्छ र उसको आज्ञापालना गर्नाले के पुरस्कार पाइन्छ भन्ने कुराको ज्ञान हुनु जरूरी छ । यस कामका लागि परलोकको जीवनको बारेमा, अल्लाहको न्यायालयमा प्रस्तुत् हुने कुरामा, अवज्ञाको दण्ड पाउने कुरामा तथा आज्ञापालन गर्नाले पुरस्कार पाउने कुरामा मानिसलाई सही तरीकाले ज्ञान र विश्वास हुनु पर्छ । जुन व्यक्तिले परलोकको जीवनको बारेमा केही जान्दैन । उसले अल्लाहको आज्ञापालन र अवज्ञा दुबैलाई निष्फल सम्झन्छ । उसको विचार त के हो भने आज्ञापालन गर्ने र नगर्ने दुबै आखिर बराबर नै हुन् किनभने ती दुबैलाई माटोमा नै जानु पर्छ । अनि उसबाट कसरी आशा गर्न सकिन्छ ? कि ऊ आज्ञापालन गर्नेका प्रतिरोधहरू र दुखः-कष्टहरू सहन स्वीकार गर्नेछ, अनि ती पापहरूबाट जोगिने छ । जसबाट संसारमा उसलाई कुनै प्रकारको हानी हुने डर हुँदैन । यस्ता भावना हुँदाहुँदै मानिसले ईश्वरीय नियम र कानूनको आज्ञापालन गर्न पनि सक्दैन ।

ईश्वरीय इच्छानुसार जीवन व्यतीत गर्न जुन नियम-कानूनको अनुसरण आवश्यक छ, त्यसलाई स्वयम् आफ्नो बुद्धिले बनाउन निकै गाह्रो हुन्छ र त्यो कहिल्यै हुन सक्दैन। तर यो प्रश्न उठछ कि हामीलाई ती सबै कुराहरूको विषयमा ज्ञान कहाँबाट प्राप्त हुनेछ ? माथि उल्लेख गरिएका सम्पूर्ण कुराहरूको बारेमा ज्ञान प्राप्तिका माध्यम कताबाट आउनेछ ? किनभने यस विषयमा सबैलाई थाहा छैन । यी

सबै प्रश्नहरूका उत्तर निस्सन्देह यस्ता मानिसबाट प्राप्त हुन्छ, जसलाई सत्यता, सत्यवादिता, ईश-भय र अति पवित्र जीवन अल्लाहद्वारा मानिसहरू मध्ये कसै-कसैलाई दिइएको छ। अल्लाहले हामीलाई स्वयं बताउनु भएकोछ भन्ने कुरामा विश्वास गरी हामीले त्यसै बमोजिम जीवन व्यतीत गर्नु पर्छ।

अल्लाहले मानिसहरूलाई यस्तो कठिन परीक्षामा समावेश गरेको छैन। उसले आफ्नो कृपाले मानिसहरू मध्ये नै यस्ता मानिस निर्माण गर्‍यो। जसलाई उसले आफ्नो र आफ्ना विशेषताहरूका बारेमा यथार्थ ज्ञान दिएको थियो। यति मात्र नभएर उसले ती मानिसहरूलाई संसारमा ईश्वरीय इच्छानुसार जीवन-यापन गर्न सक्ने तरीका पनि बताइ दियो। त्यस्तै उनीहरूलाई परलोकीय जीवनका सम्बन्धमा पनि यथार्थ ज्ञान दिइ सो ज्ञान अन्य व्यक्तिहरू समक्ष पुर्‍याउने आज्ञा गर्‍यो। यस्ता मानिसहरू अल्लाहका **रसूल (ईशदूत)** हुन्।

माथि उल्लेख गरिएका कुराहरूद्वारा के यो स्पष्ट हुँदैन कि मानिस संदेष्टाको विषयमा ज्ञान प्राप्त गर्नका लागि आफ्नो प्रत्येक आवश्यकता भन्दा बढ़ी विक्षिप्त छ ? किनभने संदेष्टाको निर्देशन बिना जीवन व्यतीत गरेमा लोक र परलोक दुबै ठाउँमा सफलता र सौभाग्य प्राप्त हुने छैन। उनीहरू बाहेक राम्रो र नराम्रो कुराको बारेमा ज्ञान प्राप्तिको कुनै माध्यम पनि छैन, र उनी बाहेक कसै अरुद्वारा अल्लाहको प्रसन्नता पनि प्राप्त हुने छैन। निस्सन्देह ईश्दौत्व

संसारको प्राण, त्यसको प्रकाश र त्यसको जीवन हो, यदि प्राण, प्रकाश र जीवन नभए भने संसारमा के बाकी रहने छ र? बिना ईश्दौत्व सृष्टि अँध्यारो छ। यसले गर्दा संदेष्टाहरूको आवश्यकता शरीरलाई प्राण, आँखालाई उज्यालो र आत्मालाई जीवनको आवश्यकाता भन्दा बढी हो।

अल्लाहले उपर्युक्त कारणहरूले गर्दा र मानिसहरूलाई सत्य मार्गदर्शनका लागि सृष्टिकाल देखि नै आफ्ना संदेष्टाहरू हरेक युग, समुदाय, समाज र जातीमा पठाएको छ। ती सम्पूर्ण संदेष्टाहरू शुभ समाचार दिने र डराउनेवाला हुन्।

सब भन्दा पहिलो संदेष्टा नूह (मनू) अलैहिस्सलाम हुन् र अन्त्यमा अल्लाहले मुहम्मद सल्लल्लाहु अलैहि व सल्लम (उहाँ माथि शान्ति होस्) लाई यस संसारमा पठाएर उनै मार्फत् अनयौलताको बादललाई छिचोली एकेश्वरबादको शिक्षा दियो। उहाँ पछि परलयसम्म कोही संदेष्टा आउने छैन। उहाँ पश्चात जुन सुकै व्यक्ति ईशदूतत्व वा संदेष्टा हुनको दाबी गर्छ भने ऊ झुटो हो। धर्म सिद्धान्तद्वारा यसलाई विस्तृत रूपमा वर्णन गरिएको छ र यस माथि सम्पूर्ण सम्प्रदाय सहमत छन्।

## संदेष्टाहरूको धर्म

अल्लाहले मानिसहरूको मार्गदर्शनका लागि हरेक युग र समुदायमा संदेष्टाहरू पठाउनु भयो भन्ने कुरा हामीले

थाहापाई सक्यौं । सबै संदेष्टाहरूको निमन्त्रण भिन्न-भिन्न थियो वा एउटै थियो भन्ने प्रश्न उठिन्छ । यस विषयमा ज्ञान पनि प्राप्त गर्नु जरूरी छ किनभने यसबाट मानिस आफ्नो जन्मको उद्देश्यलाई बूझ्न सक्छ ।

आदम अर्थात मानव परम पिताको सन्तान सम्पूर्ण मानिसहरूलाई मात्र एउटा कुरा तिर आमन्त्रित गरिएको छ । श्री आदमका सन्तान जो राम्रा थिए, उनीहरूले आफ्ना पिताले बताएको सोझो बाटोमा हिंडे । तर जो नराम्रा थिए, उनीहरू कुबाटोतर्फ लागे । र पिताद्वारा सिकाइएका अल्लाहको कानून पनि तिनीहरूले बिर्सिसकेका थिए ।

यसैलाई स्मरण गराउन र सोझो बाटो तिर मार्गदर्शन गर्नका लागि अल्लाहले नूह, इब्राहीम, मूसा, ईसू र मुहम्मद जस्तै अनेकौं संदेष्टाहरू संसारमा पठाएर उनीहरू माथि पवित्र ईश्वरीय-ग्रन्थ पनि अवतरित गर्नु भयो । ती ग्रन्थहरू जसको नाम हामीलाई थाहा छ - तौरात, जबूर, इन्जील र कुरआन हुन् । सबै धार्मिक पुस्तकहरूमा संदेष्टाहरूद्वारा दिइएका आदेश मात्र एउटै हो भन्ने कुराको चर्चा पाइन्छ । वास्तवमा सबै संदेष्टाको मूल निमन्त्रण, संदेश र धर्म एउटै थियो । कि मात्र एउटै ईश्वर अल्लाहको लागि आत्म-सर्मपण गरी उसै कै पूजा गरियोस् र उसंग कसैलाई सहभागी नबनाइयोस् । संसारका सबै धर्महरूका ग्रन्थहरूमा यो उल्लेख गरिएको छ कि अल्लाह एउटै हुन् र उनी नै पूज्य एवं आराध्य योग्य हुन् । यो भने अवश्य छ कि

शिक्षाको तरीका अनि जीवनको नियम र कानून केही बेग्लै थियो । यसको केही उदाहरणहरू यस प्रकार छन् :-

तौरात **(Old Testament)** मा एकेश्वरवादको बारेमा बयान गरिएको छ : (Hear, O Israel : The Lord our God is one Lord . ( Deuteronomy 6 : 4 ) हे इस्राईल ! सुन, हाम्रो प्रभु एउटै हो र उही उपास्य हो ।

इन्जील **(New Testament)** मा एकेश्वरवादको विषयमा यस प्रकार बयान छ : Now this is life eternal, that they Know you, the only true God, and jesus Christ, Whom you have sent. (John 17 : 3) उही नै वास्तविक एक्लै उपास्य हुन् र ईसू मसीह उनद्वारा पठाइएका मात्र संदेष्टा हुन् भन्ने कुरा जान्नु नै चिरञ्जीवी जीवन हो । अर्को ठाउँमा छ : ईसूले उत्तर दिनु भयो : उल्लेख छ कि तिमी मात्र एक परमेश्वरको प्रणाम गर र मात्र उनैको उपासना गर । (लुका : ४-८)

ईश्वर एउटै हो र हिन्दू धर्मको ब्रह्म सूत्र नै यही हो : "एकम ब्रह्म द्वितीय नास्ते नेह नास्ते किंचन" अर्थ : ईश्वर एउटै छ दुईवटा होइनन् कहिल्यै होइन ।

यसरी सबैको धर्म एउटै थियो । संदेष्टाहरूले आफ्ना-आफ्ना जातिलाई उनीहरूले बिर्सेका कुरा सम्झाई दिए । उनीहरूले मानिसलाई एक ईश्वर अल्लाहको उपासना गर्न सिकाए । बहुदेववाद र मूर्ति पूजा गर्ने कामबाट रोके । कुप्रथाहरूको विरोध गरे । ईश्वरीय इच्छा बमोजिम जीवन

व्यतीत गर्ने विधि, सही कानून र नियमहरू तिनीहरूलाई मान्ने आदेश समेत दिए ।

## पहिले धर्महरूमा परिवर्तन

सबै संदेष्टाहरूको धर्म एउटै थियो र अल्लाहले उनीहरू माथि ईश्वरीय-ग्रन्थ अवतरण गऱ्यो भन्ने कुरा हामीले थाहा पाइ सक्यौं । ती ग्रन्थहरू मध्ये धेरै पुस्तकहरूका नाउँ हामीलाई थाहा छैन, मात्र चारवटा ग्रन्थहरू, जसको नाउँ हामीलाई थाहा छ माथि उल्लेख गरि सकेको छु ।

यो पनि सबै धर्महरूमा स्वीकार्य कुरो हो कि धर्म त्यस ईश्वरीय सिद्धान्त र नियम-विधिको नाउँ हो । जसलाई उसले आफ्ना संदेष्टाहरू माथि पवित्र ग्रन्थहरूद्वारा अवतरण गऱ्यो । प्रत्येक धर्म, ग्रन्थ र संदेष्टाहरूको कथन माथि आधारित छ । ईश्वरद्वारा उतारिएका पुस्तकहरू जुन आज मानिसहरूको हातमा छन् । के यी त्यही हुन् जुन कि संदेष्टाहरू माथि उतारिएका थिए ? यो एउटा संक्षिप्त प्रश्न हो। यसको उत्तर यो हो कि ती पुस्तकहरू जुन कुरआन भन्दा पूर्व आइसकेका छन् र त्यसका जुन नमूना अचेल व्यक्तिहरूको हातमा छ । यो, त्यो होइन जुन संदेष्टाहरू माथि उतारिएको थियो । किनभने ती पुस्तकहरूमा मानिसले ईश्वरका वाणीमा धेरै हेरफेर गरिएको र उनीहरूले आफना तर्फबाट धेरै कुराहरू

मिसाएको कुरा सबै भन्दा पछिल्लो ईश्वरीय ग्रन्थ कुरआनमा भनिएको छ । मूल ग्रन्थ आफू सित नभएको स्वयं ईसाई र यहूदीहरूले स्वीकार गरेका छन् । अब त केवल तिनका अनुवाद मात्र पाइन्छन् र तिनीहरूमा शताब्दीऔं देखि नै हेरफेर गर्ने काम भैरहेको छ र अहिले सम्म जारी नै छ । फेरि यस्ता ग्रन्थहरू पढनाले यिनमा भएका कतिपय कुराहरू ईश्वरले भनेका होइनन् वा हुनै सक्दैन भन्ने स्पष्ट थाहा हुन्छ । यसकारण अचेल यस्ता जति पनि ग्रन्थहरू पाइन्छन् । ती ठीक-ठीक ईश्वरका ग्रन्थहरू होइनन् किनभने ईश्वरका कथनमा मानिसको भनाई मिसिएका वा छासमिस भएका छन् । फलस्वरूप यस्ता कथनहरू मध्ये कुन ईश्वरका हुन् र कुन चाहिं मानिसका हुन् छुट्याउन कठीन पर्दछ । साथै हामी सित यसरी छुट्याउने केही साधन पनि छैन । यसको अतिरिक्त ती पुस्तकहरूमा केही यस्तो भविष्यवाणीहरू बाँकी छन् जसद्वारा अन्तिम संदेष्टा र उनको निमन्त्रणको विषयमा ज्ञान प्राप्त हुन्छ । परिवर्तनको स्पष्टीकरण गर्नका लागि केही किताबहरूबाट केही उदाहरणहरू उल्लेख गरी संक्षिप्तमा यसको कारण पनि पेश गर्दछु । अन्तिम ईशदूत बारे पहिलेका ग्रन्थहरूमा भएका कथनहरू उल्लेख गरी कुरआनमा परिवर्तन भएको छैन भन्ने कुरा बारे आउने खास अध्यायमा कारणहरू उल्लेख गरिएको छ ।

निस्सन्देह उपस्थित तौरात (Old Testament) र इन्जील (New Testament) वर्तमानमा जुन यहूदी र इसाईको हातमा छ

त्यसमा परिवर्तन, बढोत्तरी र कमी गरिएको छ भन्ने कुरामा कुनै सन्देह छैन र यो परिवर्तन धर्माचार्यहरू माथि अप्रकट छैन । उनीहरूलाई थाहा छ कि उपस्थित तौरात (Old Testament) र इन्जील (New Testament) मा भएका कथनहरू ती होइनन् जसलाई अल्लाहले मूसा र यिसू मसीह (अलैहिमुस्सलाम) माथि अवतरण गरेको थियो । र कसरी हुन सक्छ जबकी त्यसमा (क्रिश्च्यानको रायमा) ईसू मसीहको फाँसीको कहानी, उहाँ माथि उनको समुदायद्वारा गरिएका अत्याचारहरू र तीन दिन पछि चिहानबाट जीवित भएर उठ्नको कथन इत्यादि । जुन क्रिश्च्यान धर्माचार्यहरूद्वारा लेखिएका छन् भन्ने कुराहरू पाइन्छन् । यस्तै इन्जीलहरूका कथनहरूमा पनि विरोध छ । किनभने चारवटा इन्जीलहरू मत्ता, मर्क़िस, लूक़ा र यूहन्ना जुन ईसू मसीह पछि चारवटा धर्मका प्रचारकहरूद्वारा लेखिएका छन् । उनीहरू आफ्नो भएका ठाउँहरूमा आ-आफ्ना निमन्त्रण बमोजिम लेखेका थिए । त्यसमा भएका कथनहरू एक अर्काको विरोध गर्छ ।

(Old Testament) मा पवित्र ग्रन्थका तीनवटा प्रसिद्ध प्रतिहरू थिए । पहिलो : इब्रानी, जुन यहूद र सामान्य परोटेस्टेन्ट धर्माचार्यहरू कहाँ विश्वासनीय छ । दोस्रो : यूनानी, जुन पन्द्रहौं शताब्दीसम्म क्रिश्च्यानहरू कहाँ विश्वासनीय थियो । तेस्रो : सामरी, जुन सामरीहरू कहाँ विश्वासनीय छ । यी तीनवटा प्रतिहरूमा शाब्दिक परिवर्तनहरू अनगिन्त ठाउँमा पाइनछन् । उदाहरणको रूपमा : इब्रानी प्रतिमा, पहिलो

किताब, नवौं अध्याय, पच्चीसौं श्लोकमा यस प्रकार छ : (उसको **बहिनी** को नाउँ मुअका थियो) तर **बहिनी** को ठाउँमा **स्वास्नी** सत्य छ । इन्जीलको व्याख्या कारक आदम कलार्कको कथन छ : (इब्रानी प्रतिमा **बहिनी** को शब्द छ, तर युनानी, लैटिनी र सिर्यानी प्रतिमा **बहिनी** को सट्टामा **स्वास्नी** छ । र अनुवादकहरूले यसैलाई स्वीकार गरेका छन् । अब यहाँ सामन्य प्रोटेस्टेन्ट धर्माचार्यहरू इब्रानीलाई छाडेर उपर्युक्त अनुवाद स्वीकार गर्दछन् किनभने उनी कहाँ इब्रानी प्रतिमा परिवर्तन स्पष्ट छ ।

इन्जील (New Testament) मा स्वयं इसाई धर्मको प्रचारक पाउलको कथन ईसा अलैहिस्सलामको कथनको विरोध गर्छ । जसद्वारा स्पष्ट रूपले परिवर्तन साबित हुन्छ । जुन यस प्रकार छ :

**Teaching about the Law : Paul against Jesus !**

Paul said in Ephesians 2 : 15, **"He (Jesus) abolished the jewish Law with its commandments and rules,** in order to create out of the two races one new people in union with himself, in this way making peace."

अर्थ:पाउलले भन्यो: ईसा अलैहिस्सलामले यहूदहरूका आदेशहरूमा परिवर्तन गरी उनको धर्म सिद्धान्तलाई निवृत्त गऱ्यो, ताकि सबैलाई एकत्रित गरेर एउटा समूह तयार गरि शान्ति कायम गर्न सकियोस् ।

तर ईसा अलैहिस्सलामले के भन्नु भएको थियो :

But Jesus said in Matthew 5 : 17, "**Do not think** that I have come to do away with **the Law of Moses and the teachings of the prophets. I have not come to do away with them, but to make their teachings come true.**"

अर्थ : यो नसम्झनु होस् कि म मुसाको धर्म सिद्धान्त र अर्को संदेष्टाहरूको निर्देशन र निमन्त्रण बाहेक कुनै नयाँ चीज लिएर आएको छु, म तिनीहरूबाट अलग छैन बरु सबैको सिद्धि र प्रमाणिकरण गर्नको लागि पठाइएको छु ।

यस्तै परिवर्तनका थुप्रै उदाहरणहरू छन् । मूल विषय नहुनाले सबै बयान गर्नु गाह्रो छ । यो मात्र एउटा उदाहरण हो । किश्च्यन धर्मको सत्यता र त्यसमा ईश्वर र उसको उपासनाको विषयमा के लेखिएको छ भन्ने कुरालाई एउटा छुट्टै पुस्तकमा लेख्नु पर्दछ । ती पुस्तकहरूमा परिवर्तनका कारणहरू निम्नलिखित छन् :

१. यिनी पुस्तकहरूको साँचो बोध उपस्थित छैन र जुन बाँकी बोध छन् सो उनको अनुवादको रूपमा छन् तथा अनुवाद र सुस्पष्टता गर्नेहरूको बिचार मिली सकेका छन् ।

२. असल पुस्तक त्यस संदेष्टाको युगमा लेखिएको होइन बरु धेरै शताब्दी पछि ती बोधहरूद्वारा लेखिएको छ । जसलाई तिनी संदेष्टाका अनुयायीहरूले प्रतिलिपि गरेका थिए । जस्तो कि इन्जील (New Testament) को हाल छ । अथवा

उसको बोध फेरि नष्ट भइसकेको । फेरि दोस्रो पटक त्यस बोधबाट लेखिएको छ । जसलाई त्यस सन्देशवाहकलाई मान्छेहरूले लेखेका थिए । जस्तो कि तौरात (Old Testament) को हाल छ ।

३. यी सबै किताबहरू साधारण मानिसहरूका लागि थिएन बरु प्रत्येक पुस्तक मुख्य समुदायको लागि थियो । किनभने संदेष्टाहरूको आउने किया त्यस पछि पनि समाप्त भएको थिएन। बरु प्रत्येक संदेष्टा आफू पछि आउने संदेष्टालाई सूचना दिन्थे ।

४. ती भाषाहरू, जसमा ती पुस्तकहरू उतारिएका थिए, तिनमा परिवर्तन आइसकेको थियो । आज उनलाई कसैले पनि बुझ्न सक्दैन । यदि कुनै लेखिएका वस्तु त्यो भाषामा लेखिएको पाइन्छ भने त्यसबाट यो प्रमाण लिनु साँचो हुन सक्दैन कि यही नै असल पुस्तक हो । जब कि त्यसमा जुन कुरा छ उसबाट केही पनि बुझ्न सकिन्न ।

## अन्तिम संदेष्टा मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम)

संदेष्टाहरूको आउने किया समाप्त भएको थिएन । बरु प्रत्येक संदेष्टा आफू पछि आउने संदेष्टालाई सूचना दिन्थे । त्यो समय थियो, जब सम्पूर्ण संसार तथा मानवीय जातिका लागि अन्तिम संदेष्टा **हजरत मुहम्मद सल्लल्लाहु अलैहि व**

सम्रमको अरबमा जन्म भएको थियो । उनको विषयमा भविष्यवाणी प्रत्येक धर्मको ग्रन्थमा पाइन्छ । तौरात (Old Testament), इन्जील (New Testament) वेद र पुराणहरूमा उनको नाउँ र विशेषताहरू बयान गरिएका छन् । उदाहरणको लागि केही यसरी प्रस्तुत गरिएको छ :-

तौरात (Old Testament) मा ईशदूतको नाउँ मुहम्मद भनिएकोछ । लन्दन १८४८ ई. र बैरूत १८८४ ई. मा प्रकाशनमा ल्याइएका तौरात र पुराना प्रतिहरू हब्कूकमा स्पष्ट र साफ लेखिएको छ : मुहम्मदको सुन्दरताबाट आकाश उज्जयालो भयो, उनको प्रशंसाबाट पृथ्वी भऱ्यो,.. तिम्रो आवाज नहर र समुद्रहरूसम्म पुग्यो, हे मुहम्मद ! नजिक हो र निस्सन्देह पहाडहरूले तिमीलाई हेरे र काँपे ।

यस्तै उनको विषयमा इन्जीलमा पनि ईसु मसीह अलै. को यस प्रकार कथन छ :-

" ..But I am telling you the truth : it is better for you that I go away, because if I do not go, the Helper will not come to you . But if I do go away, then I will send him to you . And when he comes, he will prove to the people of the world that they are wrong about sin and about what is right and about God's judgment . They are wrong about sin, because they do not believe in me; they are wrong about what is right, .. they are wrong about judgment, ... who reveals the truth about God, he will lead you into all the truth. He will not speak on his own

authority, but he will speak of what he hears and will tell you of things to come. He will give me glory, because he will take what I say and tell it to your..." **{John 15-16}**

अर्थ : " .. तर म सत्य भन्छु, मेरो यताबाट जानु नै तिमीहरूका लागि बेस हो। यदि म यताबाट नगएं भने त्यो अर्थात तिम्रो मद्दतगार आउने छैन, यदि म गई हालें भने ऊ आउने छ। आएर सबैलाई सत्य र असत्य बताउने छ र अल्लाहको निर्णय पनि सुनाउने छ। जसले मलाई झुटाएको छ उनीहरू असत्य माथि छन् र उनीहरूको निर्णय पनि गलत छ किनभने पहिले देखि नै यस संसारको हाकिमको निर्णय भइ सकेको छ। उहाँ अल्लाहको विषयमा साँचो कुराहरू बताएर सत्यता तिर मार्गदर्शन पनि गर्ने छन्। उहाँ आफ्नो तर्फबाट केहि पनि भन्ने छैनन् बरु ईश्वरीयवाणीद्वारा उहाँलाई जो बताइने छ त्यसैको भविश्यवाणी गर्ने छन्। उहाँ मलाई सम्मान दिने छन् किनभने म तिमीहरूलाई के-के भनेको छु भन्ने कुरा लिऐर त्यसको खबर गरी दिने छन् .." । **{John 15-16}**

हिन्दू धर्मका पवित्र ग्रन्थहरू मध्ये भविष्य पुराण हो। यस ग्रन्थमा तेस्रो भागको तेस्रो खण्डमा तेस्रो सर्ग जसलाई परती सर्ग भनिन्छ। त्यसमा अन्तिम ईश्दूत मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको विषयमा साफ र स्पष्ट भविष्यवाणीहरू छन्। श्लोक नम्बर ५ मा छ :

एतस्मिन्नन्तरे मलेच्छ आचार्य्येण समन्वितः।
महामद इति ख्यातः शिष्यशाखासमन्वितः।

अर्थ : म अचानक के हेर्छु कि एउटा मुहामद भन्ने गुरू जुन आर्य समाज मध्ये होइनन् आफ्ना अनुयायीहरू सित आउनु भयो ।

यस मंत्रमा मुहम्मदको नाउँ पनि बयान गरिएको छ । उहाँ बाहेक कुनै अरू संदेष्टाको नाउँ मुहम्मद राखिएको छैन ।

वेदहरूमा अन्तिम ईशदूतको नाउँ (नराशंस) (अहमिद्धि) (मामद) ईत्यादि लेखिएको छ ।

नराशंस को लागि हेर्नु होस् : अथरवेद कान्ड २०, सू॰ १२७, मंत्र १, एवं मंडल २, सू॰ ३, मंत्र १२, का॰ १, सू॰ १८, मंत्र ७, एवं ५ / ५ / २ ईत्यादि ।

नराशंस को अर्थ हो त्यो व्यक्ति जसको प्रशंसा गरिएको हो, र अरबी भाषामा मुहम्मदको पनि त्यही नै अर्थ हो । अहमद र मुहम्मद उहाँको नाउँ नै थियो ।

इंग्लैंडको विश्व विख्यात दार्शनिक र विद्वान श्री बर्नाडशाले जनवरी १४३३ ई. मा भारत आगमनको अवसरमा "लाइट" लाहौरको प्रतिनिधिसित अन्तिम ईशदूतको सम्बन्धमा जुन विचार व्यक्त गर्नु भएका थिए । ती श्री शाको शब्दमा यस प्रकार छन् :

" मैले श्री मुहम्मदको जीवन बारे अध्ययन गरेको छु । उहाँ एउटा महामहिम मानव हुनु हुन्थ्यो । मेरो रायमा उहाँलाई मानवताको मुक्तिदाता भन्नु पर्दछ । मलाई विश्वास

छ कि यदि उहाँ जस्तो मानिस वर्तमान संसारको अधिनायक हुन्छ भने त्यसको सम्पूर्ण जटिल समस्याहरूका यस प्रकार समाधान गरिदिन्छ कि मानवीय संसार इच्छित सुख-शान्तिको दौलतबाट मालामाल भइ हाल्थ्यो ।"

## मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको निमन्त्रण

सम्पूर्ण संदेष्टाको निमन्त्रण उपास्य एउटै अल्लाह हो, उस बाहेक कोही पूज्य छैन भन्ने कुराको विषयमा हामी थाहा पाइसक्यौं। अन्तिम ईशदूत मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमलाई कुन कुरा दिएर पठाइएको थियो र उहाँले सम्पूर्ण जगतलाई के सिकाउनु भयो भन्ने विषयमा केही वर्णन गर्दछु ।

उहाँलाई पहिलेका संदेष्टाहरू जस्तै अल्लाह एक्लै उपास्य हो, मात्र उसैको लागि आत्म समर्पण गर्ने भन्ने कुराको पूर्ण शिक्षा तथा पूर्ण विधान र कानून दिएर सम्पूर्ण जगतमा यसै एकेश्वरवादको प्रचार प्रसारको निम्ति यस सेवा कार्यमा नियुक्त गरिएको थियो । उहाँले मानिसलाई केवल एउटै ईश्वरको मात्र उपासना गर्ने, संयम एवं शुभकर्म मात्र गर्ने शिक्षा दिनु भयो । मूर्ति पूजा, बहुदेववाद र दुष्कर्मको बिरुद्धमा प्रचार गरी एकेश्वरवादको निमन्त्रण दिनु भयो । सरदारहरूका सरदारीमा चलेको पाखण्ड तोड्नु भयो । मानिस र मानिसका बीच भएको ठूलो सानोको भेदभाव मेटाउनु भयो । गोत्र र वंश सम्बन्धी पक्षपातलाई अज्ञानता भन्नु भयो ।

चिरकाल देखि समाजमा भइरहेको झगडा समाप्त गरी आफन्तमा मेलमिलाप गराउनु भयो ।

उहाँको पहिले संदेष्टाहरू जस्तै एकेश्वरबाद, अल्लाहलाई सम्पूर्ण समर्पण गरिदिनु, उसको आज्ञाको पालन गर्नु र अल्लाह एउटै हो, उसको कुनै अंशियार छैन भन्ने कुराको निमन्त्रण थियो । उहाँको यस शिक्षा र निमन्त्रणलाई "इस्लाम" भनिन्छ । अल्लाहले उहाँ माथि पनि सम्पूर्ण ईशदूत जस्तै "कुरआन" भन्ने एउटा इश्वरीय ग्रन्थ अवतरण गर्नु भयो ।

## इस्लाम

संसारमा जति पनि धर्महरू छन् । ती मध्ये प्रत्येकको नाम कि त कुनै विशेषव्यक्तिका नामबाट राखिएको छ वा त्यो जातिको नाममा राखिएको हुन्छ, जुन जातिमा सो धर्मको जन्म भएको हो । उदाहरणको लागि ईसाई धर्मलाई लिनुहोस् : यस धर्मका प्रचारक "ईसा मसीह" भएकाले यो धर्मको नाम ईसाई धर्म भएको हो । यसैगरी "महात्मा गौतम बुद्ध" बुद्ध धर्मका प्रवर्तक भएकाले नै यस धर्मको नाम बुद्ध धर्म रहन गएको हो । प्रवर्तक जरदश्तको नाउँमा जरदुश्ती धर्मको नामाकरण गरिएको हो । यहूदा नामी एक विशेष जातमा जन्मेको हुनाले यहूदी धर्मको नाम राखिएको हो । हिन्दुत्वको नाम हिन्दुहरू माथि राखिएको हो । यसैगरी संसारका अन्य धर्महरूको नामाकरण गर्न यसरी नै गरिएको छ ।

तर, इस्लाम धर्मको सम्बन्ध कुनै व्यक्ति वा जातिसँग छैन । यो यसका विशेषताहरू मध्ये एउटा विशेषता हो । बरु यसको नामले एउटा विशेष गुण प्रकट गर्छ, जसको सम्बन्ध स्वयं "इस्लाम" शब्द र यसको अर्थसित छ । यो नाम कुनै व्यक्तिको मष्तिस्कबाट निस्केको होइन न त यो कुनै विशेष जात-जातिमा सीमित छ । यसको सम्बन्ध कुनै व्यक्ति, देश वा जातिसित पनि छैन । इस्लामको विशेषता वा गुण लोकमा उत्पन्न गराउनु नै यसको उद्देश्य हो । प्रत्येक युग र हरेक जातिका जुन-जुन सत्यप्रिय तथा असल मानिसहरूमा यी गुण पाइयो, ती सबै मुस्लिम थिए, मुस्लिम हुन् र मुस्लिम नै रहने छन् । अरबी भाषामा "इस्लाम" शब्दको अर्थ आज्ञा पालन गर्नु वा आत्म समर्पण गर्नु र उपदेश दिने व्यक्तिको कुरालाई विना कुनै शंका मानिलिनु हो । अर्थात अल्लाहको अनुशरण गर्नु र उसको समक्ष सम्पूर्ण समर्पण गरि दिनुलाई इस्लाम भन्दछन् । ईश्वरीय आदेशहरू मान्ने वा मानिने तथा उसको आज्ञा पालन गर्ने वा गरिने हुनाले यो धर्मको नाम इस्लाम राखिएको हो ।

यसो हुनाले अल्लाहद्वारा संसारमा पठाइएका सबै ईशदूतहरू मुस्लिम थिए र उनीहरूको धर्म इस्लाम थियो किनभने उनीहरू मात्र अल्लाहको अनुशरण गरी उनको आदेश मानिसहरू सम्म पुऱ्याउँथे । यो सबै ईशदूतहरूद्वारा भनिएको छ । संसारका पहिलो मानिस मुस्लिम हुनु हुन्थ्यो, उनको धर्म इस्लाम थियो । ईसाई धर्मको प्रचारक ईसा मसीह मुस्लिम हुनु हुन्थ्यो, उनको

धर्म इस्लाम थियो । र बनू इस्राईलका संदेष्टाहरू मुस्लिम थिए, उनीहरूको धर्म इस्लाम थियो । बाईबलमा यहाँले कहिल्यै यो भेट्ने छैन कि अल्लाहले संदेष्टा श्री मुसा अलैहिस्सलामका अनुयायी वा सन्तानहरूसित भनेको हो कि तिनको धर्म यहूदी हो, न त श्री ईसाका अनुयायीहरू सित भनियो कि तिनको धर्म क्रिश्च्यन हो । विश्वास छैन भने उठाउनु होस् उनीहरू माथि अवतरण गरिएका ईश्वरीय-ग्रन्थहरू ।

अन्तिम ईश्वरीय-ग्रन्थ कुरआनमा सबैको धर्म इस्लाम थियो भन्ने कुराको चर्चा पाइन्छ । ईसा मसीह अलैहिस्सलामको कथन छः परन्तु जब (आदरणीय) ईसाले उनीहरूबाट इन्कारको आभास गरि लिनु भयो भने भन्नु भयो : अल्लाहको मार्गमा मेरो सहायक को-को हो । हवारीहरूले भने : कि हामी अल्लाहको मार्गमा सहायक छौं । हामीले अल्लाहमा विश्वास गर्‍यौं र तपाई साक्षी रहनुस् हामी मुस्लिम हौं । (सूरः आलइम्रान ५२) यस्तै इब्राहीम र उनको छोरो याकूब "इस्राईल" अलैहिमुस्सलामले आफ्ना सन्तानलाई भने : यसैको उपदेश इब्राहीम तथा याकूबले आफ्ना सन्तानलाई गरे, कि हे हाम्रा सन्तानहरू हो ! अल्लाहले तिमीहरूका लागि यसै धर्मलाई निर्धारित गरी दिनु भयो, सावधान ! तिमी मुस्लिम रहि नै मरुन् । (सूरः बकरः १३२)

इस्लाम धर्मको अन्तिम संदेष्टा श्री मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमले पनि यसैको प्रचार गर्नु भयो । स्वयं अल्लाहको कथन छ : निस्सन्देह अल्लाह निर स्वीकार्य धर्म मात्र इस्लाम नै हो । (सूरः आलइम्रान १९) अर्को ठाउँमा भन्नु भएको छ : आज

मैले तिम्रा लागि धर्मलाई पूरा गरि दिएं र तिमीहरू माथि आपनो अनुकम्पा पूरा गरि दिएं र तिमीहरूका लागि इस्लाम धर्मलाई पसन्द गरें। (सूरः अल-माइदः ३)

श्री महात्मा गांधीले यस प्रकार आफ्नो विचार व्यक्त गरे : "इस्लाम आफ्नो अति विशाल युगमा पनि अनुदार थिएन, बरु सम्पूर्ण संसार त्यसको प्रशंसा गरिरहेको थियो, त्यो समय, जबकि पश्चिमी दुनिया अंधकारमय थियो, पूर्व क्षितिजको एउटा उज्जवल तारा चमक्यो, जसद्वारा विकल संसारलाई प्रकाश र शान्ति प्राप्त भयो। इस्लाम झूटो धर्म होइन, हिन्दूहरूले पनि त्यस्तै अध्ययन गर्नु पर्दछ, जसरी म गरेको छु। फेरि तिनीहरू पनि मेरो समान यससंग प्रेम गर्न थाल्ने छन्। .. अहिले मलाई पहिले भन्दा बढी विश्वास छ कि इस्लाम तरवारबाट फैलेको छैन, बरु यो इस्लामको पैगम्बर (संदेष्टा) को अत्यन्त सादा जीवन, उनको निःस्वार्थता, प्रतिज्ञापालन र निर्भयता थियो, उनको आफ्नो मित्र र अनुयायीहरूसित प्रेम गर्नु र ईश्वर माथि भरोसा राख्नु थियो। यो तरवारको शक्ति थिएन, बरु यी सबै विशेषताहरू र गुण थिए, जसले सम्पूर्ण बाधाहरू समाप्त गरेर आफ्नो समस्त कठिनाईहरू माथि विजय प्राप्त गरि लियो"। (जगत महर्षि, पृ. २)

# कुरआन

अल्लाहले संदेष्टाहरू माथि ईश्वरीय पवित्र ग्रन्थ अवतरित गर्नु भयो। ती ग्रन्थहरू मध्ये अन्तिम ग्रन्थ, अन्तिम संदेष्टा मुहम्मद सल्लल्लाहु अलैहि व सल्लम माथि अवतरित गरिएको छ भन्ने कुरको विषयमा हामी पछिल्लो अध्यायबाट केही थाहा पाइ सकेका छौं।

त्यो अन्तिम ग्रन्थलाई कुरआन भनिन्छ। दिव्य कुरआन पूर्व जुन ईश्वरीय ग्रन्थहरू पठाइएका थिए। ती एक विशेष समुदाय र खास अवधिसम्मको मार्गदर्शनका लागि मात्र थिए। ती ग्रन्थहरू समयको उतार चढावको प्रभाव र परिवर्तनहरूबाट सुरक्षित हुन सकेनन् भन्ने कुराहरू बारे विस्तृत रूपमा अघिल्लो अध्यायमा बयान गरिएको छ।

दिव्य कुरआन अन्तिम ईश्वरीय सन्देश हो, जुन अन्तिम संदेष्टा माथि सम्पूर्ण मानव र दानव जाति र सधैं-सधैंका लागि अवतरित भयो। कुरआनका शिक्षाहरू व्यवहारिक छन्। यसको प्रमाणस्वरूप श्री मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको आचरण एवं प्रत्येक समयका सदाचारी मुस्लिमहरूको व्यवहार प्रस्तुत गर्न सकिन्छ। कुरआनका उपदेशहरू मनुष्यको आम हितमा छन् एवं उनीहरूको व्यवहारिक समस्याहरूसँग बहस गर्दछन्। यो न त उनीहरूको शरीर तथा त्यसको आवश्यकतालाई हीन सम्झन्छ न नै आत्मालाई बेवास्ता गर्दछ। यो न त मनुष्यलाई अल्लाह बनाउँछ न नै

अल्लाहलाई मनुष्य । जसको जुन स्थान छ त्यसलाई त्यही नै दिन्छ । त्यो मात्र एउटै स्रष्टा अल्लाहको उपासना र अराधना गर्न तिर आमन्त्रित गर्छ । अल्लाहसँग साझेदार बनाउनबाट रोक्दछ । यस बाहेक यसका थुप्रै विशेषताहरू छन् जसको विषयमा ज्ञान प्राप्त गर्नका लागि अध्ययन गर्नु पर्दछ ।

श्रीमती सरोजिनी नायडू (भूतपूर्व गवर्नर उत्तर प्रदेश इन्डिया) को कथन छ : "कुरआन नान-मुस्लिमहरूका प्रति उदारता देखाउन सिकाउँछ । मानव-जातिको सेवा त्यसको शिक्षाको सार हो" ।

कुरआन सजिलो तथा सबैको मन मस्तिष्कमा आउने ग्रन्थ हो । यसका शिक्षाहरू धेरै सजिलो र मानव प्रकृति अनुकूल छन् । यो एउटा सम्पूर्ण जीवन पद्धति हो । यदि यसका शिक्षाहरू पालन गर्ने हो भने सांसारिक र आध्यात्मिक दुबै उन्नती प्राप्त गर्न सकिन्छ । यस ग्रन्थमा एक तिर आध्यात्मिक शिक्षा पाइन्छ भने अर्को तिर आचार संहिता, अर्थ नीति, पारिवारिक सम्बन्ध, समाज परिचालन, राष्ट्रसंचालनका नियम आदि हरेक जीवन क्षेत्रको लागि नीति नियम एवम दिशा निर्देश पनि उल्लेखित छ ।

पन्डित शान्ता राम, बी. ए. आपनो (**मुहम्मद साहब का जीवन चरित्र**) भन्ने पुस्तकमा लेख्नु हुन्छ : "कुरआनका शिक्षाहरू धेरै सजिलो, सरल र मानव-प्रकृति अनुकूल छन् । एउटा अत्यन्त पक्षपाती मानिस पनि त्यसमा यस्तो कुनै

प्रकारको त्रुटि देखाउन् सक्दैन, जुन संस्कृति वा सभ्यताको आदर्शबाट बाहिर हो"।

कुरआनका प्रत्येक वाक्यहरू आजसम्म पनि उस्तै अवस्थामा छन् जस्तो कि अल्लाहका संदेष्टा मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको समयमा थियो। यसले चाँडै नै हामीलाई आफूतिर आकर्षित र मंत्रमुग्ध गर्दछ। यहाँसम्म कि यस प्रति हृदयमा श्रद्धा जन्मिन्छ। यसको शैली शानदार र जोरदार छ। मानव विचारको एउटा नयाँ आयाम दिन्छ र आचरणको एउटा नौलो सुन्दर व्यवस्था पनि।

कुरआन अल्लाहको तर्फबाट अक्षरशः अवतरित भएको हो। न त कुनै मानवले न त कुनै दानवले एउटा यस्तो अध्याय तयार गर्न सक्छ न नै कुनै सानो श्लोक पनि। कुरआनमा यसलाई ललकारेर भनिएको छ, बहुतै मानिसहरूले प्रयास पनि गरे तर सफल हुन सकेनन् र संसार रहञ्जेल सम्म कोही पनि एउटा श्लोक लेख्न सक्दैन। यसका शिक्षा, भविष्यवाणी र विस्मित गरिदिने जानकारीहरू कालान्तरमा सत्य-तथ्य प्रमाणित हुँदै आएका छन्। यो संसारका सबै भन्दा बढी पढिने किताब हो। निस्सन्देह यो एउटा किताब हो जुन सबै भन्दा बढी कण्ठस्त पारिन्छ। यसका शिक्षाहरू वैज्ञानिक र तर्क संगत छन्। यस ग्रन्थले सम्पूर्ण ब्रह्माण्ड ऊपर सोच विचार गर्न र नयाँ नयाँ तथ्यहरू फेला पार्न कैयौं श्लोकहरूमा आह्वान गरेको छ। कुरआन र विज्ञानमा कुनै टकराव छैन।

सर विलियम मयूर (लाइफ़ आफ़ मुहम्मद) भन्ने पुस्तकमा लेख्नु हुन्छ : "यो एउटा अकाट्य सत्य हो कि कुरआनको प्रत्येक वाक्य आज पनि त्यस्तै छ जस्तो कि अल्लाहको संदेष्टाको युगमा थियो"।

अरबौं संख्यामा छापिएका प्रतिहरू कुनै पनि प्रकारका परिवर्तन अथवा छाँटकाटबाट पूर्णताः मुक्त छन्। कुरआन आफ्नो मूल रूपमा सुरक्षित र आफ्नो वास्तविक हालतमा छ। सोही किसिमले शेष छ। जस्तो कि मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम माथि उतारिएको थियो। यसका केही कारणहरू निम्नलिखित छन्:

१. यसको रक्षाको जिम्मेवारी अल्लाहले स्वयं लिनु भएको छ। जस्तो कि कुरआनमा उसको कथन छ : निस्सन्देह कुरआनलाई हामीले उतारेका छौं र निस्सन्देह हामीले नै यसको सुरक्षा गर्नेछौं। (सूरः अलहजर ९)

२. कुनै आयत (श्लोक) अवतरित हुने बित्तिकै मुहम्मद सल्लल्लाहु अलैहि व सल्लम आफ्नो निगरानीमा आफ्ना साथीहरूलाई लेख्न लगाउँदथे र उनी अल्लाहको तरफबाट अवतरित गरिएका यी श्लोकहरूलाई नमाज एवम् जनसभाहरूमा पढ्दथे।

३. मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमका धेरै साथीहरूले उनको जीवनकालमै सम्पूर्ण कुरआन, सो अवतरित हुने कारण र त्यस ठाउँलाई पनि कण्ठस्थ गरेका थिए।

४. स्वयम् हजरत मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम कुरआनलाई अल्लाहका फरिश्ता (दूत) हजरत जिब्रईललाई सुनाउँथे। अझ आफ्नो अन्तिम दिनहरूमा त उहाँले कुरआनलाई दुई पटक सुनाउनु भएको थियो।

५. सम्पूर्ण कुरआन अवतरित भएपछिको प्रथम दशकमै यस कुरआनका थुप्रै प्रतिहरू तेस्रा प्रतिनिधी हजरत उसमान गनी रजियल्लाहु अन्हुले तयार गरेर इस्लामी संसारका विभिन्न भागहरूमा पठाइदिएका थिए। त्यसपछिको हरेक पींढीमा ठूलो संख्यामा मानिसहरूले सम्पूर्ण कुरआनलाई कण्ठस्त गर्दै तथा आफना उत्तराधिकारीहरूलाई कण्ठ गराउँदै र पढाउँदै आएका छन्। यसले अब कुनै पनि मानिस त्यसमा केही पनि परिवर्तन गर्न सक्दैन।

६. त्यो भाषा जसमा कुरआन उतारिएको छ अहिले सम्म शेष छ र अहिलेसम्म त्यसमा कुनै पनि परिवर्तन भएको छैन।

# इस्लामका केही विशेषताहरू

उपर्युक्त अध्यायहरूबाट इस्लामका केही विशेषताहरू बारे ज्ञान प्राप्त भइ सक्यो । परन्तु यस साँचो धर्मका अत्यन्त महत्त्वपूर्ण विशेषताहरू छन्, जसलाई एकत्रित गरेर एउटा ठूलो पुस्तक तयार गर्न सकिन्छ । जानकारीको लागि संक्षेपमा केही विशेषताहरू पेश गर्दछु :

१. **एकेश्वरवाद** (एक अल्लाहको उपासना) : स्रष्टा एउटै हो, उही उपास्य हो र उस बाहेक अरु कसैको पूजा गर्न वर्जित गरिएको छ भन्ने कुराको विषयमा पघिल्ला अध्यायबाट हामीले जानिसकेका छौं । इस्लामको वास्तविक संदेश यो हो कि अल्लाह र उसको सृष्टि दुईवटा भिन्न-भिन्न अस्तित्व हुन् । अल्लाह आफ्नो सृष्टिको कुनै अंश होइन, उसको कोही साझेदार छैन, उही जन्म दिनेवाला हो र सबै माथि उसैको उपदेश एंव आदेश लागू हुन्छ । प्रत्येक ठाउँमा स्रष्टा आफ्नो सृष्टिमा समावेश गरेको छ अथवा आफ्नो सृष्टिको कुनै रूपान्तरमा व्यापत छ भन्ने कुराहरूलाई इस्लाम नकार छ । यसमा सृष्टि उपासनाको कुनै मान्यता छैन चाहे यस उपासनालाई सृष्टिको माध्यमद्वारा ईश्वरको उपासनको नाम नै किन नदिइयोस् । इस्लामको संदेश यो हो कि मात्र उसै एक अल्लाहको पूजा गरियोस् र उसको सृष्टिको उपासना प्रत्यक्ष र अप्रत्यक्ष रूपमा नगरियोस् । यसैले इस्लाम नै मात्र

एकेश्वरबादको धर्म हो किनभने यसैमा मात्र एक ईश्वर अल्लाहको उपासना गरिन्छ ।

सृष्टिकर्ता एउटै हो सबैलाई थाहा भए त पनि किन उसित अरु वस्तुहरूको उपासना गरिन्छ ? यो एउटा विचार गर्नु पर्ने प्रश्न हो ?

२. **समानता :** इस्लाम समानताको शिक्षा दिन्छ, अर्थात यसमा कुनै भेदभाव छैन । अल्लाहले सम्पूर्ण मानिसलाई एउटै व्यक्ति आदमद्वारा जन्म दिएको छ, सबै उनैका सन्तान हुन् । अनेक जाति उपजाति तथा परिवारहरूका विभाजन मात्र परिचयका लागि हो । यसको उद्देश्य परस्पर प्रधानता र श्रेष्ठता देखाउन होइन जस्तो कि दुर्भाग्यले यसलाई जाति तथा वंशको प्रतिष्ठाको कारण र आधार बनाइ राखिएको छ । इस्लामले यी सबै भेदभावलाई समाप्त गरेर अल्लाहको दृष्टिमा सबभन्दा श्रेष्ठ र सम्मानित मानिस अल्लाहसित डरने व्यक्ति हो भन्ने कुरको आदेश दिएको छ ।

इस्लामले समस्त मानिसलाई समानता प्रदान गरेर भेदभाव नगर्ने आदेश दिई मिलीजुली जीवन व्यतीत गर्ने हुकुम गरेको छ । इस्लाम धर्ममा कुनै लसपसको भावना छैन । सबै मानवलाई यस संसारमा जीउँदो बस्नको अधिकार छ र सबै मनुष्य आफन्तमा भाई-भाई हुन् । कुनै व्यक्तिलाई कुनै व्यक्ति माथि प्रधानता होइन । मात्र जुन व्यक्ति अल्लाहसित डराउँछ, उसको आज्ञा-पालन गर्दछ र उसको अवज्ञा गर्दैन

भने त्यो व्यक्ति सब भन्दा महान, श्रेष्ठ र सम्मानित छ यद्यपि ऊ मानिसहरूको दृष्टिमा तल्ल जातिको किन नहोस् ।

मात्र इस्लाम धर्मका आधारहरूमा ध्यान दिएर हेर्नु होस्, सबैमा समानता छ । उदाहरणको रूपमा सलात (नमाज) र हज्ज हेर्नु होस्, नमाजमा सम्पूर्ण मुस्लिमहरू मस्जिदमा संगै उभिएर अल्लाहको उपासना गर्छन् । हज्जमा सम्पूर्ण मुस्लिामहरू एउटै ठाउँ र एउटै प्रकारको लुगामा अल्लाहको पूजा गर्छन् । धनी होस् वा फकीर, कालो होस् वा गोरो, राजा होस् वा प्रजा कुनै छुवाछूत छैन । सबै मुस्लिामहरू एउटै थालीमा संगै बसेर खाना खान्छन् । यस्तै इस्लामको हरेक उपासनामा बराबरीको आदेश दिइएको छ ।

इस्लाम बाहेक प्रत्येक जातिमा छुवाछूतको गलत भावना पाइन्छ । हिन्दू धर्ममा मानिसहरूलाई चार वर्गमा बाँडिएको छ :- ब्राहमण, क्षत्री, वैश्य र शूद्र । शूद्रको जन्म ब्रह्माको तल्लो खुट्टाबाट भएको छ भनेर त्यसलाई सब भन्दा तल्लो वर्गमा राखिएको छ । ठूलो जातिवालाले तल जातिवालालाई केही महत्त्व दिदैन । प्राचीनकालमा भारतमा सार्की वा निचलो जातिको केही अस्तित्व थिएन । आज पनि कहिलेकाँहीं भारतमा यो अमानवीय कार्य उच्च जातिहरूले दोहोऱ्उँछन्, जुन मानवीयबाट बिल्कुलै टाढा छ । यहाँसम्म कि शूद्र वर्गका मानिसहरूलाई हिन्दू धर्ममा पवित्र ग्रन्थ छुन र मन्दिरमा प्रवेश गर्नको अधिकार थिएन । अब यहाँ स्वयं विचार गर्नु होस् ?

३. इस्लामले धर्म, बुद्धि, प्राण, संपत्ति, गोत्र र मानव मर्यादाको रक्षाको प्रबन्ध गरेको छ, यसले गर्दा प्रत्येक हानिकारक वस्तुहरूको सेवनबाट मनाही गरिएको छ। इस्लामको दृष्टिमा सब भन्दा अमुल्य वस्तु मनुष्यको ज्यान हो। यसैले रक्सी खानु, आफू माथि अत्याचार गर्नु र आत्महत्या गर्नुबाट रोकिएको छ। इस्लामले उपर्युक्त पाँचवटा वस्तुहरूको रक्षा गर्न माथि जोर दिएको छ। यसका सम्पूर्ण नियमहरू यिनी पाँच वस्तुहरूको सुरक्षा गर्न माथि आधारित छन्, एउटा पनि नियम यस परिधिबाट बाहिर छैन। यस विषयमा अरु धर्महरूमा के कथन छ ?

४. **भ्रातृत्व** : इस्लामले आपसमा भ्रातृत्व सम्बन्ध कायम गर्नको आदेश गरेको छ। समस्त मुस्लिमहरू एक अल्लाहमा आस्था राख्दछन् र उसैको उपासना गर्छन्। अतः सब एक-अर्काको मित्र, सहायक, दुःखको साथी र भाई-भाई हुन्। इस्लामको अध्ययन गर्नेहरू हेर्न सक्छन् कि यसले आफ्ना अनुयायीहरूलाई कुन प्रकारले एक अर्का संग प्रेम र आवश्यक्ता पुरा गर्नको आदेश दिएको छ। बरु आवश्यकतामा भएका मुस्लिम आफू माथि अर्को मुस्लिम भाईलाई प्राथमिकता दिन्छ भनेर थुप्रै उदाहरणहरू लेखिएका छन्। अर्का धर्महरूमा भ्रातृत्व सम्बन्धको विषयमा के छ ?

५. **गरीबीको उपचार** : दान इस्लामको आधारहरू मध्ये तेस्रो आधार हो। कसै माथि यो कुरो अप्रकट छैन कि इस्लामको आर्थिक जीवनमा यसलाई ठूलो महानता प्राप्त छ।

यसको अभिप्राय ठूलो हो, यसको प्रभाव व्यक्तिगत र सामाजिक दुबै ठाउँमा उच्चतर हो र यसको दर्जा सामाजिक र आर्थिक नियमहरूमा उच्च हो। यो यस्तो महत्त्वपूर्ण कर्म हो जुन धनी र गरीब मानिसहरूका बीच एउटा पुल जस्तै काम गर्दछ। जसबाट विश्वमा इस्लामिक आर्थिक स्थिति ठीक रहन्छ।

यो पनि थाह हुनु पर्छ कि इस्लामले धन माल तिर वास्तविक दृष्टिले हेरेको छ। त्यो इस्लामको दृष्टिमा जीवनको नसो हो, व्यक्तिगत र सामाजिक व्यवस्थालाई कायम गर्ने हो। इस्लामले प्रत्येक व्यक्तिका लागि पर्याप्त मात्रामा उसको खाने पदार्थ, लूगा, बस्ने घर र असल आवश्यकताहरूका प्रबन्ध गरेको छ। यहाँसम्म कि कुनै पनि व्यक्ति बिना कुनै नियम व्यर्थ नहोओस् भन्ने कुराको पनि ख्याल गरिएको छ। अरु धर्महरूमा दानको विषयमा नियमितरूपले के भनिएको छ ?

६. **आइमाईका स्थान :** इस्लामले आइमाईहरूलाई महत्त्वपूर्ण स्थान प्रदान गरी यस्तो अधिकार दिएको छ जुन अर्को धर्ममा पाइदैन। उनीलाई पूर्ण स्वतंत्रता दिएर उनी माथि कुनै प्रकारको अत्याचार र अन्याय गर्न वर्जित गरेको छ। बिहेको शुभ अवसरमा पत्नीको इच्छानुसार पतिद्वारा दिने पेवा नियुक्त गरी त्यसमा मात्र पत्नीको अधिकार हो जसलाई पत्नीको अनुमति बिना प्रयोग गर्न उचित होइन भनेर त्यसै बमोजिम कर्म गरिएको छ। यसै प्रकार पत्नीको सम्पूर्ण

प्रयोजन पतिले पुरा गर्नु पर्दछ । पति हुँदा हुँदै पति र उसको बाच्चाहरूका पालन पोषणको प्रबन्धको जिम्मेवारी पत्नीको होइन बरु उसको घरमा बसेर बच्चाहरूका रेख देख र घर भित्र कार्य गर्ने मात्र जिम्मवारी हो । आइमाईका लागि इस्लामले रोजी आर्जन गर्नु, उस माथि कुनै खर्च गर्ने पुरुष नहुनको अवस्थामा वैध गरेको छ। तर, उसले सम्पूर्ण परदा र संयम्संग कार्य गर्नु पर्दछ । अमेरिकी काँग्रेसको एउटा सदस्यको कथन छ : "महिला देशको सेवा राम्ररी घरमा बसेर गर्न सक्छे, नकि आफिसहरूमा आएर"।

इस्लाममा महिलालाई बुवाको धनमा साझेदार निश्चित गरिएको छ । अर्थात उसलाई उत्तराधिकारी मानिएको छ । कहिले पुरुषको आधा भाग, कहिले बराबर र कहिले अधिक तोकिएको छ ।

यस्तै इस्लामले हरेक प्रकारको खराबीबाट सुरक्षित राख्नका लागि महिला माथि परदा गर्न अनिवार्य गर्‍यो । यसमा पुरै शरीरलाई छोप्नु अनिवार्य हुन्छ । इस्लामले महिला माथि अत्याचार गरेको छ भनेर अहिले पश्चिमी-संसार र अमेरिकाले महिलालाई स्वतन्त्रताको सुन्दर शब्दमा फाँसेर अँगप्रदर्शन तथा पुरुषहरूका आँखालाई चिसो गराउने सामाग्री बनायो। आफिस, अस्पताल र विमानमा बरु जीवनको प्रत्येक मोड़मा महिलालाई राखियो । यसको फलस्वरूप यो भयो कि उनीहरूले महिलासँग जनावर जस्तै व्यवहार गर्न थाले । महिलालाई स्वतन्त्रताको जालमा फाँसेर नारीसँग खुल्ला

उपहास गरिन्छ । अचेल विशाल रोगहरूले सबैको आँखालाई खोल्यो ।

यसैले गर्दा इस्लामले महिलालाई राजनैतिकबाट टाढा रहनको लागि महिलालाई आदेश दिएको हो । यसको सम्मान एंव सतीत्व र मर्यादाको रक्षाका लागि अपरचित व्यक्तिसँग जथाभावी आउने जानेबाट रोकिएको छ । अहिले पश्चिमी संसारको अधिकांश महिलाहरू आफ्नो सुरक्षा इस्लाम धर्मको शुद्ध नियममा हेर्न थालिन् ।

आमालाई त इस्लामले धेरै महत्त्व र ठूलो स्थान प्रदान गरेको छ। आमाको दर्जा बुवा भन्दा तीन पटक बढी छ बरु आमाको पाइला तल स्वर्ग हो भनिएको छ । कैयौं कारणले गर्दा एक भन्दा बढी महिलासित बिहे गर्न र तलाक (बिवाह विच्छेद) को अनुमति दिइएको छ । यसरी महिलाको अधिकार बारे विशेष ज्ञानका लागि यस विषयमा लेखिएका इस्लामिक पुस्तकहरूका अध्ययन गर्नुहोस् । अब यहाँ स्वयं विचार गर्नु होस् कि महिलासित अत्याचार इस्लाममा छ वा इस्लाम बाहेक अनय धर्म वा समाजहरूमा छ ?

७. **प्राकृतिक धर्म** : मानिसको प्राचीन भन्दा प्राचीन जे जति इतिहास हामीलाई थाहा भएको छ र प्राचीन भन्दा प्राचीन जातिका स्मारक चिन्हहरू भेटिएका छन्, त्यसबाट के पत्ता लाग्छ भने मानिसले प्रत्येक युगमा कसै नकसैलाई "ईश्वर" मानेका छन् र कसै न कसैको उपासना गरेका छन् ।

अहिले पनि संसारमा जति जातिहरू छन् ती सबै जतिकै असभ्य वा सभ्य भए पनि सबैले ईश्वर मानेका छन् तथा तिनको उपासना गरेका छन् । यसबाट मानिसको भित्री हृदयमा यस्तो एउटा चीज छ, जसले ईश्वरलाई मान्न र तिनको उपासना गर्न कर लगाउँछ ।

अब प्रश्न उठ्छ त्यो चीज के हो ? आफ्नो अस्तित्व र सम्पूर्ण मनुष्यको स्थितिलाई हेरेर हामी आफैले यो प्रश्नको उत्तर दिन सक्छौं ।

मानिस वास्तवमा सेवक तथा दास र उपासक भएर नै जन्मेको छ । अल्लाहलाई रब (पालनहार) स्वीकार गर्नुको गवाही प्रत्येक मनुष्यको प्राकृतिमा समावेशित छ । यस विषयमा इस्लामको पवित्र ग्रन्थ कुरआनमा भनिएको छ : " तथा जब तपाईको पोषकले आदमको संतानको पिठ्यूँबाट उनको संतानलाई निकालेर उनीबाट उनैको सम्बन्धमा वचन लियो कि के म तिम्रो रब (ईश्वर, पालनहार) होइन? सबैले उत्तर दिए, किन होइन, हामी सबै साक्षी छौं " (सूरः अलआराफ १७२) यो वचन आदरणीय आदमको सृष्टिको उपरान्त उहाँ पछि हुने संतानसित लिइएको थियो । अन्तिम संदेष्टा मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमले यस प्रकार वर्णन गर्नु भएको छ : "प्रत्येक शिशु प्राकृति माथि जन्म लिन्छ, परन्तु उसको आमा-बुवा उसलाई यहूदी, ईसाई अथवा अग्निपूजक बनाई दिन्छन् .." यो प्रकृति र प्राकृतिक धर्म नै एकेश्वरबाद हो र

उसद्वारा अवतरण धर्म विधान हो जुन अहिले इस्लामको रूपमा सुरक्षित तथा विद्यमान छ ।

संसारको सम्पूर्ण वस्तु मुस्लिम र आज्ञाकारी हो । यस विषयमा अल्लाहको कथन यस प्रकार छ : " के तिनीहरू अल्लाहको धर्म अतिरिक्त कुनै अन्य धर्मको खोजमा छन् ? जब कि समस्त आकाशहरू र पृथ्वीमा बस्नेहरू अल्लाहका आज्ञाकारी हुन् । प्रसन्नतासित होस् वा अप्रसन्नतासित होस्, सबैलाई उसै तरफ फर्काइने छ " (सूरः आल-इम्रान ८३) जब आकाश र धरतीको कुनै पनि वस्तु अल्लाहको सामर्थ्य तथा शक्तिबाट बाहिर छैन भने यहाँ उस समक्ष टाउको टेक्ने र आफूलाई आत्म-समर्पण गर्नेबाट कहाँ भाग्नु हुन्छ ?

## पुनर्जीवन र परलोक

संसारका प्रमुख धर्महरू इस्लाम, ईसाई, यहूदी र हिन्दु, जसलाई मान्नेहरू यस संसारमा ठूलो संख्यामा पाइन्छन् । यी सबै धर्महरूमा पुनर्जीवनमा विश्वास राख्छन् । तर धरतीमा धेरै कम मानिसहरू मात्र यस्ता छन् जसले पुनर्जन्मलाई मनुष्य आफ्नो कर्मानुसार मृत्यु पश्चात फेरि यसै संसारमा जन्म लिन्छन् भन्ने अर्थमा लिन्छन् ।

वेदकालको धेरै समय पछि यो सिद्धान्तलाई फैलाइयो, यहाँसम्म कि यो वैदिक धर्म पछि विस्तारै उत्पन्न हुने वहुदेववादीय धर्मको मुख्य आधार बन्न गयो । अन्यथा

वेदहरूमा कहीं पनि आवागमनीयको अर्थमा पुनर्जन्मको अर्थ उल्लेख भेटिदैन । त्यसमा केवल पुनर्जीवनको अर्थमा नै पुनर्जन्मको चर्चा भएको पाइन्छ ।

वेदको ज्ञाता र ठूला ठूला विद्वानहरूले पनि यही कुराहरूलाई स्पष्टरूपले भनेका छन् । उदाहरणहरू थुप्रै छन्, मात्र श्री दुर्गाशंकर सत्यार्थीजी द्वारा भनिएको कुरो संक्षिप्तमा प्रस्तुत गर्दछु । उहाँ आफ्नो लेख "वेद र पुनर्जीवन" मा यही कुरा सिद्ध गरेका छन् कि वेदहरूमा आवागमन छैन । वेदहरूका अनुसार दुई मात्र जीवन छ, एक वर्तमान जीवन अर्को मरणोप्रान्त परलोक वा परलौकिक जीवन । वेद पुनर्जन्मको आवागमनीय सिद्धान्तको जोरदार खण्डन गर्दछ । सत्यार्थी जी को लेखमा खास गरी बताइएको छ कि आवागमन हैन अन्तिम दिनको सिद्धान्त वेदको सिद्धान्त हो । वेदमा त्यसै दिनका लागि डराइएको छ । साथै यो त्यही तथ्य हो जसलाई अन्तिम ईश्वरीय ग्रन्थ पवित्र कुरआनमा " कियामत (महाप्रलय) " भनिएको छ ।

प्राचीन भारतीय इतिहासमा छांदोग्यले सर्वप्रथम पुनर्जन्मको आवागमनीय सिद्धान्तको प्रचार गरे । त्यस पछि प्रत्येक युगमा यसको प्रचार गरियो । वेदहरू प्राचीन हुने हुनाले त्यसमा विवाद एवं मिसावट गराइयो तर कुरआनमा यस्तो भएको छैन र हुन पनि सक्दैन जसो पछिल्लो अध्यायमा उल्लेख गरि सकेको छु ।

ती दुई जीवन लोक र परलोक हुन् । परलोकमा कर्मको बदला प्राप्त हुन्छ स्वर्ग (जन्नत) र नरक (जहन्नम) । पवित्र कुरआन मृत्यु पश्चात परलौकिक जीवनको खाका प्रस्तुत गर्दछ । जसमा न्याय विधि अनुसार यस जीवनको विस्तार व्यहोरा लिई साक्षी सामुन्ने ल्याएर, अपराध बताएर, फैसला सुनाई कर्मानुसार नराम्रो कर्म गर्ने र बहुदेववादीहरूलाई नरकमा पूरा पूरा सजाय दिइनेछ । यसै प्रकारले राम्रो कर्म गर्ने र एकेश्वरवादीहरूलाई अति उत्तम र पूर्णरूपले परिणाम अन्नत सम्म स्वर्गमा लगातार दिइने छ ।

**लेखक :**

**मोतीउल हक मदनी**